पुष्करलालद्वारा प्रतिष्ठापित
लाखौं पाठकको प्रिय पत्रिका

# कामना

www.newsofnepal.com
मूल्य रु. १५०/-
वर्ष ३२ । २०८० । पूर्णाङ्क ३५६



## गाईजात्रा विशेष



ISSN 1990-6781
9 771990 678005

**प्रमुख कार्यकारी अधिकृत**
दिरेकलाल श्रेष्ठ

**निर्देशक**
रकिनलाल श्रेष्ठ

**क्रिएटिभ डाइरेक्टर**
बिनी श्रेष्ठ

**सम्पादक**
विदुर गिरी

**संवाददाता**
रश्मी थापा

**प्रोसेसिङ**
सुरेन्द्रराज मानन्धर

**लेआउट/डिजाइन**
यमन मानन्धर

आवरण कार्टुन : कृशा जोशी
इलस्ट्रेसन : उमेशचन्द्र अधिकारी

*Kamana*, the entertainment encyclopedia of Nepal, is the largest selling entertainment monthly magazine of Nepal . It is also the largest exported magazine from Nepal . *Kamana* is published by Kamana News Publications, the pioneer private publication house of Nepal . Kamana News Publications is the publisher of *Sadhana* (the largest selling monthly health and beauty magazine), *Nepal Samacharpatra* (one of the leading national daily newspapers), *Mahanagar* (the largest selling evening daily newspaper - currently discontinued), *newsonepal .com* (one of the most popular infotainment websites) and *Kamana Film Awards* (the biggest award ceremony of Nepal) .

Established in 1984, *Kamana* is primarily a film magazine but also covers music, fashion, arts, culture and theater, in short, the whole entertainment industry . *Kamana* is the best vehicle to reach youth and female moviegoers and celebrities . Perhaps the biggest success among the Groups publications, *Kamana* carries its readers with an unbreakable emotional attachment issue after issue .

Individuals willing to contribute their articles and views are highly encouraged .



**कामना न्यूज पब्लिकेसन्स्**

पोबनं : २०४५, कामना प्लाजा, भीमसेनस्थान, काठमाडौं
फोन : ५३६११७९
फ्याक्स : ५३१८९९०
ई-मेल : merokamana@gmail .com





# टिकटकको चटक



**विलशन विक्रम राई (तक्मे बुढो)**

हौ... यो कथा नाइन्टिन फाउन्टिनको हैन है, यो कथा २०२३ को हो ।

हैन हौ हन के भैगाको हौ हिजोआजा जो हेरो उही भेटिन्छ यो टिकटकमा । यही टिकटकमा ज्योतिषी, यही टिकटकमा डक्टर र कन्डक्टर, यही टिकटकमा मातापिता भेटिन्छ । कसले बनाएको होला ? किन बनाएको होला ? तेस्को बुडीले चाहिं चलाउँछ कि चलाउँदैन होला ? अरूको घरमा चाहिं हौं... बुहारीले जम्मै तरकारी डराएर पकाउँदा पनि सासूससुरा बुडा कोहीसँ डराउँदैन । बरू उल्टै, घरको मान्छे डराउँछन् भरै टिकटक लाइभमा केही भनिदिने हो कि भनेर ।

नेतादेखि अभिनेतासम्म सबैको बाढी नै आएको छ, यो टिकटक भन्ने चोकमा । कतिले यही टिकटक चलाएर घरगाडी जोडे, त्यो खबर आउँछ । तर, कतिको घरगाडी टुट्यो, छुट्यो कसैले भन्दैन । यहाँ त परिवारको निन्द्रा र लाइफ बर्बाद पारेर लाइभमा बसेको पनि धेरै देखिन्छ । एले एलाई बीले बीलाई नाकमा टेप टेप गर्नु भन्दाभन्दै समाजको अगाडि नाक देखाएर हिंड्न नहुने बनाइसक्यो । कोही फलोवर्स र लाइक बढाउने धुनमा सामाजिक मूल्य र मान्यतालाई नै डिसलाइक गर्दै अघि बडिराखेका छन् । हौ... लाखे हौ ... भन्दा भनेको जस्तो हुन्छ कि उहिले हाम्रो नाइन्टिन फाउन्टिनमा लाइक पनि मन-मनमा हुने, मन परेको मान्छेको बरू टाढैबाट हेर्दै बाटोको पछि-पछि फलो हुने, अहिलेको त सीधै नाकमा टेप टेप, एले एलाई बीले बीलाई हन हौ के-के बोलेको किन बोलेको ?

मनको कुरो समाजिक सञ्जालमा किन पो खोलेको ? मेरो भान्जीबुहारी झन्डै गुल्टेको टिकटके डाक्टरले गर्दा । ज्यान घटाइने तरिका धेरै थरीका भनेर टिकटकबाट सिकाएछ । उधै-उँभै भएर सिलिम हैन झन्डै चिलीम पो भैगाको ? बेस्सरी राम्रो कोट भनेर कोट ९ सय ९९ रूपियाँ मात्रै भनेको रैछ हौ... छोरोले बाउको मुख हेर्ने दिनलाई हुन्छ भनेर टिकटकबाट मगाएको काँ हुनु ? घरमा आएर कार्टुन खोलेर हेरेको त गुडियाहरूलाई लगाइदिने खेलाउनाको कोट पो रैछ । हौ... न निल्नु न ओकाल्नुजस्तो भै गयो नि । हौ.... बिहानदेखि भोलिपल्टको बिहानसम्म एकोहोरो लाग्ने पनि पो हुने रैछ । जति धेरै तेस्मा खेल्यो तेति तल जानेहो रैछ है ।

म बुडो पनि नयाँ फोनमा टिकटक खोलेर त हेर्छु । तर, अस्ति हौं अचानक सम्धीनीको अगाडि सोर्दै-सोर्दै मोबाइलमा हेर्दाहेर्दै अचानक बोल्नुहुने पनि नहुने पनि बोलेर टिकटकमा चटक देखाकोदेखि अहँ अबचाहिं म यो टिकटक भन्ने चलाउँदिन भनेर झन्डै कसम खाएको छु । कसम हौ... अबचाहिं यो टिकटक म चलाउँदिन । अरूको अगाडि चै एकलै हुँदा त चलाउँछु नि हौं... । कथा मिलाएर बुझुम् है नानीबाबु हो, लडेको दिन र झरेको दिन टिपेर गाँस्नु मिल्दैन नि हौ । जति माया लागे पनि मायाले सन्सार थाम्दैन ।











शैलेन्द्र सिंखडा

# परिवर्तन

शान्ति क्षेत्र नेपाल भन्या अस्ति जस्तो लाग्छ
ऐले मलाई ज्यानमाराको बस्ती जस्तो लाग्छ...
पैला-पैला सुनका थैला घरमै राखिन्थ्यो
ऐले सुनको फुली लाउँदा बाँच्नै गाह्रो भो...
बलात्कारी, अत्याचारी टोलटोलमा डन
राज्यले नै गरेको छ तिनका संरक्षण
शान्ति क्षेत्र
जति पैसा बोकेर जहाँ गएनि हुन्थ्यो
हाम्री आमाको कान घाँटीमा ३५ तोला सुन थ्यो
वनमा जाँदा हातमा बाला घरमा थिएन ताला
ऐले एउटा सिक्री लाउँदा खान पर्छ भाला
शान्ति क्षेत्र ...
काँक्रो चोरलाई चोर भन्थ्यौं, बाखा चोरलाई डाँका
ऐले बैंक लुट्नेलाई दाइ भन्छौं देश लुट्नेलाई काका
अब तो नेपाल आ गया जित्ला पिना पिले
यहाँ तो हम सुरक्षित हे भन्थ्यो विदेशीले
शान्ति क्षेत्र ...
पँधेरोमा गाग्री छोडी मेलापात जान्थ्यौं
बाबियाले हात बान्दा हत्कडी ला भन्थ्यौं
शिवरात्रिमा गाँजा तान्दै हेर्थ्यौं यताउता
ऐले त गाँजा खाने अपराधि, मान्छे मार्ने नेता



# तन्त्र गीता

अर्जुन उवाच : प्रजान्त्र, स्वतन्त्र, लोकतन्त्र बेहालमा
गणतन्त्र मनपरीतन्त्र के चल्दै छ नेपालमा?
भगवानुवाच : अलमलम किम स्वतन्त्रम् लोकतन्त्रम् सर्वभक्षणम्
जन्मकैद मिनाहा कृतम् प्रचण्डम् कुर्सी रक्षणम्
देउवा बार्दली बा र छोरीको बा मिलोमतम्
टुमारो वा डेआफ्टर टुमारो गणतन्त्र हतोहतम्
छोरीतन्त्र चल्यो पहिला प्रजातन्त्र गयो सति
गणतन्त्र गन्हाउँदै छ भाउजू तन्त्र भयो अति।
अर्जुन वाच : ज-जसले तिर्न सक्दैन बैंकबाट लिएको ऋण
राजतन्त्र हिंड्न थाल्यो त्यस्ताको साथमा किन?
भगवान् वाच : गणतन्त्र भएर नै यो तथ्य भन्न पाइयो
जसले मन्दिर रित्यायो उसैलाई धर्म चाहियो
भूपतिन्द्र मल्लको पेटी क्रेन लगेर फुकालियो
प्रहरीले प्रतिकार गर्दा डीएसपी नै लुकाइयो
सिंगै सन्तानको हत्या सारा प्रमाण छिपाइयो
देवता बन्दै जनता लुट्ने त्यस्तो तन्त्र के चाहियो?



# मुना-मदन र बाहरुको दोहोरी

मदन : हे मेरी मुना मायाको तुना, नकाट कैंचीले
मुना : हे मेरा मदन नेपाली सदन ततायो भैंसीले
प्यारा, ततायो भैंसीले।
मदन : दाइजो ल्याए छोरीको बाले त्यो भैंसी तानेर
बार्दली बाले हकार्न थाले गोठालो ठानेर
मुना, गोठालो ठानेर।
छोरीको बा : मोदीले देको, डर मलाई के को?
यो मेरो चिनु हो, लौं लैजा भैंसी नगर्नु अल्छी भनेर
दिनु भो।
बार्दली बा. : भैंसीको दान, त्यो अपमान नबुझी लिनु भो
चिडिया घरमा बाघको छेउमा फालेको सिनो हो
देउ बा : चाटेर खाने होइन राँगो काटेर खाने हो
लुकेर खानेहरूले मात्र घर-घरमा लाने हो
कसैले बुरा बुझेकै छैन यो राँगो केको हो?
नागरिक विधेयक पास गऱ्या हाम्ले भोज खान देको हो
ए बाबा भोज खान देको हो।
मुना : भैंसीको डांगो तन्नेरी राँगो त्यसैको चासो भो
सुतेको सदन जुरूक्कै उठ्यो संसारमा हाँसो भो
मदन सदनको हाँसो भो
मदन : ममः र छोयला भटिचा ऐला मुना र मदन
सरकारी राँगो तर्कारी खान राजी छ सदन
मुना राजी छ सदन।
खिसिट्युरी गरेका छन् ऐले भैंसी धपाऊँदा
भोलि तारिफ गर्नेछन् ममः छोयला चपाउँदा
भैंसी काण्ड रचेका हुन् अर्को काण्ड लुकाउन
संलग्न छन् सबै यसमा भ्रष्टाचारी छिपाउन









# के म जिउँदै छु !



केदारप्रसाद घिमिरे (माग्नेबूढा)

म मरेको केही समयपछि मुस्किलले २ र ४ जना मलामी जम्मा भए । ती पनि पैसा नभएर विदेश जान नसकेका, मेडिकल फेल भएका, बूढाबूढी, केटाकेटी, दुःखीगरिब आदि । सबै छेउमा जम्मा भएर भन्न थाले 'यो मान्छे त अति नै असल थियो । मृदुभाषी, सहयोगी, सामाजसेवी आदि के-के के-के ? सबैले मेरै बखान गर्न थाले ।

ज्यूदो हुँदा दुई शब्द ओठबाट निकाल्न पैसा माग्लानजस्तो गर्नेदेखि अस्ति मात्र लाप्पा परेको शत्रुसमेत अन्मरिएछ र मेरै छेउमा बसेर बडो सिरियस मुद्रामा ढर्रा पार्दैरेछ 'ज्यादै असल मान्छे हुनुहुन्थ्यो ।' एउटाको कताबाट बुद्धि आएछ मेरो नारी छाम्यो र भन्यो- 'अलि-अलि धुकधुकी बाँकी छ ।' म सबै सुनिरहेको थिएँ । एउटाको मुखबाट फ्याट्टै निस्क्यो- ' ओहो घाटबाट उतै अफिस जाउँला भन्ठानेर आएको सेड्युल बिग्रेला जस्तो भो ।' ठूलै पीर परेजस्तो अभिनय गर्दै सबैले मलाई तुलसीको मोठमा सुताए अनि नारायण भन्नोस् भने । मैले नारायण काजी भनें । केही अन्तिम इच्छा छ कि ? अन्तिम इच्छा सोधे । मैले भने- 'एकचोटी डाक्टर भेट्न चाहन्छु ।'

मलाइ नजिकैको सरकारी अस्पताल लगे । डाक्टर भेट भो, तर उहाँको अनुहार कस्तो भने अस्पताल जान भनेर घरको गेटमा पुग्दा श्रीमतीले प्याच्च अपशब्द बोल्दिनाले ठुस्स अनुहार पारेको जस्ता, बैरागी अनुहार परेको । डाक्टरले मलाई सुटुक्क कानमा भने- 'के भीड भाडामा आइराको ? उता मेरो क्लिनिकमा आ भए नि हुन्थ्यो नि । त्यतै आउनुस् ५ बजे पछि ।' ५ बजे मलाइ पुऱ्याए उसको क्लिनिक । डाक्टर उनै हुन्, तर पाँच बजेपछि चाहिं ज्वाइँलाई जस्तो स्वागत गर्दै हसिलो अनुहार पारेर सोधे के भो हजुर ? मैले भनें- 'दोमन भो' के दोमन भो ? म जिउँदै छु कि मरेको छु त्यति भन्दिनु पऱ्यो । डाक्टर साब के म जिउँदै छु ? डाक्टर साब छक्क मात्र परेनन्, तीन छक्क, सात छक्क, बाह्र छक्क परे र घरी टाउको कन्याउने, घरी कान कन्याउने, घरी चिलाउँदै नचिलाएको ठाउँतिर पनि कन्याउँदै सोधे- 'यो कस्तो प्रश्न हो ?' तपाईं त जिउँदै जस्तो देख्छु त ?'

म : तपाइले देखेर हुन्छ ? म मरे जस्तो लाग्छ ।

डाक्टर : के कारणले तपाईंलाई मरे जस्तो लाग्यो ?

म : बोल्न पर्ने ठाउँमा कतै नबोलेको देख्दा म आफैंलाई मरिसकेको हो कि भन्ने भान हुन्छ । कि आत्मा मात्रै मरेको हो ? सास गइसकेर लास मात्र बाँकी भाको त हैन नि ?

डाक्टर : तपाईं बोल्न नसकेको कहिले हो ?

म : जहिले जहिले बोल्न पर्ने हो, त्यहिले त्यहिले बोल्न सकिनँ । जस्तै सुन काण्ड आउँछ, समाचाहरू हेर्छु, बुरूक्क तीन हात उफ्रिरेर बोल्नु जस्तो हुन्छ, फेरि यसो मन विचार गर्दा आफ्नै पार्टीका मान्छेले सुन ओसारेका हुन् बोल्नुहुन्न जस्तो लाग्छ अनि बोल्दिनँ । फेरि तिनीहरूको पार्टीका मान्छेले सुन ल्याउँछन्, अब चाहिं नबोली छोड्दिनभ्रैं हुन्छ, फेरि आफ्नो पार्टीकाले ल्याउँदा बोलेको छैन, अहिले पनि बोल्नुहुन्न जस्तो लाग्छ र बोल्दिनँ । फेरि आफ्नै पार्टीको मान्छेले सुन ल्याउँछन्, आफ्नो भनेर हुँदैन बोल्नुपर्छ भ्रैं लाग्छ । अनि तिनीहरूको पार्टीका मान्छे हाम्रो मान्छेले ल्याउँदा बोलेको छैन, तिनीहरूले आफ्नै बेइमानी पनि बाहिर ल्याएका छैनन्, मेरा मान्छे मात्र नांगो बनाउन किन बोल्नुजस्तो लाग्छ बोल्दिनँ । डाक्टर साब, के यो म मरेको लक्षण हो ?

डाक्टर : अहिल्यै भन्न सक्दिनँ । मरेको अरु लक्षण बटङटङ भन्नु त ?

म : फेरि पशुपतिको जलहरी भिकेर तिलहरी बनाए रे भन्ने कुरो आयो । काण्ड-प्रकाण्ड पूरै हिसाब गर्दा त ओहो त्यो उत्तापट्टिको भ्रुण्डले गरेको रैछ, अबचाहिं बोल्न पर्छजस्तो लागेर मुख खोल्न लागेको, फेरि मेरापट्टिकाले हसुर्दा केही बोलिनँ, यो बत्तीस दन्त फिटिक्कै खोलिनँ, अर्काले खाँदा मात्र मुख खोल्दा पक्षपाती भइएला भन्ठानेर पाप-धर्म सम्झेँ र फेरि बोलिनँ ।

वाइडबडी काण्ड आयो । हाम्रा लेक्चररले क्याम्पसमा भन्नुभएको सम्झेँ- मान्छेको दिमाग भनेको वाइड हुनुपर्छ माइन्ड पनि वाइड हुनुपर्छ । त्यसपछि वाइडबडीका बारेमा बोलेर किन न्यारो हुनु भन्ने महान् विचार आयो बोलिनँ ।

सर्प काण्ड आयो, ७२ करोड क-कसले बाँडेर खायो ? सर्पका बारेमा बोल्ने कि नबोल्ने भनेर छिमेकमै पूजा गर्ने पुजारीलाई सोधेको, ओहो बाबु सर्प भनेको नाग देवता हुन् । देवताका बारेमा मुख नखोल बाबु भने । उहाँले भनेकै मानें ।

ओम्नी काण्ड आयो । सबैले ओम्निमा लगेर सिंगै पार्टी होम्नी ? भनेर उसकै पार्टीभित्र विरोध भयो, अहँ म बोलिनँ । ओम्नीले ल्याएको ओखति उसैलाई खुवाउनुपर्ने अवस्था आयो । यस्तो हुँदा नि नबोल्ने म के भाका ? कतै मभित्रको म मरिसकेको त हैन ?

ट्रस्टको जग्गा भ्रष्टको अखडा भनेको जस्तो नेपाल ट्रस्टको जग्गा पनि मिलाई-मिलाई बिलाइसकें । अब यहाँ चाहिं बोल्नैपर्छ भनेर बोल्न खोजेको, यत्रो समय यति धेरै काण्डमा बोलिएन अब मान्छे मात्र चिढाउन के बोल्नु भन्ठानेर फेरि बोलिनँ । नबोल्दा-नबोल्दा ओठ, मुख, दाँत, गिजामा पूरै खिया लागिसक्यो । डाक्टर साब कतै म मरिसकेको त हैन ?

ललिता दिदीको जग्गा पनि प्लटिङ गरेर भागबन्डा गरिवरी हसुरी सकेछन् । खानेले खाइसके बेकारमा के शत्रु बढाउनु भनेर बोलिनँ, अहँ बोल्न मन लागेन ।

नेपालीलाई नक्कली भुटानी शरणार्थी बनाएर अम्रिका पठाएको अर्को काण्ड रे फेरि । यसमा चाहिं बोल्छु भन्ठानेको ठ्याक्कै मेरा बाल्यकालमा पढाएका हेडमास्टर भेट हुनु भो । सर मैले त यो नक्कली प्रकरणमा बोल्ने विचार गरें, धेरै कुरा पनि थाहा पाएँ भनेको, ओहो नक्कलीको विषयमा नबाल्नु है, एक त नक्कली बनाउने सबैलाई समाउन थालो भने ब्युटिपार्लर चलाउने त सबै जेलभित्र हुन्छन् । खास कुरा मैले नि पैसा दिएको थिएँ यस्तो लफडा भयो जाने पाइएन रे । यी र यस्ता लुटतन्त्रका बारेमा कतै पनि बोल्न नसक्ने, थुक्क मेरो जिन्दगी हुतिहारा म मरिसकेको हुनाले त यस्तो भाको

होलानी डाक्टर साब । कि के हो ?

डाक्टरः अरु कहाँ-कहाँ बोल्न सक्नुभएन ?

म : लडाकूको नाममा आएको पैसा लुड्काएको पनि नथाहा पाएको कहाँ हो र ?

बुडी गण्डकीमा भएको लुछाचुँडी पनि नबुझेको होइन । नागरिकता विधेयकका बारेमा पनि बोलिनँ । तेत्तीस किलो सुनको बारेमा बोलिनँ । पञ्चायत कालमा भएका कति घटनामा बोलिनँ, लाउडा, धमिजा, इँटाभट्टा काण्ड, गौर काण्ड, लिपुलेक, महाकाली, वीरेन्द्रको वंशनाश । मदन भण्डारी, अमर लामा काण्ड । पशुपति शर्माले गीत गाएजस्तो लुट्न सके लुट भनेझैं भाको छ मेरो देश । अझ राष्ट्रियताको विषयमा त बोलेर छातीमा गोली थाप्नुजस्तो हुन्छ तर त्यही बेला पानी थाप्न जाने बेला हुन्छ । भन्या बेलामा पानी आउँदैन धारामा । फेरि सोच्छु आवेगमा मैले छातीमा गोली थापें भने भोलिदेखि घरमा कसले पानी थाप्ला ? यस्तै सोचेर त्यसै सेलाउँछु । यसरी कति हो कति अहँ कतै बोलिनँ ।

डाक्टर : तपाईंको यो सबै कुरा सुन्दा मैले पनि मेडिकल क्षेत्रमा भइरहेका विभिन्न नांगो नाचका विरूद्धमा आवाज निकाल्न सकिनँ । म पनि त कतै बोलिनँ त्यसैले म पनि पहिल्यै मरेको पो हो कि भन्ने शंका भयो । पहिले म जचाएर आउँछु भनेर अर्को डाक्टरको क्लिनिकतिर लाग्नु भो । आज पर्खेको ठ्याक्कै एक हप्ता भो पर्खेकोपर्ख्यै छु । डाक्टर ले भन्न सकेनन् तपाईंहरूले भन्न सक्नुहुन्छ कि ? भन्दिनोस् न, के म जिउँदै छु ?

# सांसद र संसद् भवन

अनिता प्रधान, काठमाडौं

*हुन्छ एक दिन गाईजात्रा पर्व*
*सम्झन्छन् सबैले आफ्ना मरेका आफन्तलाई।*
*तर, देशमा हुन्छ, दिनहुंजसो गाईजात्रा*
*दिनहुंजसो हुन्छ, राजनीतिको हिलो छ्यापाछ्याप।*
*नेताले भाषण दिन्छन्, गाईजात्रे पाराले*
*भाषणमा हुन्छ, उखान टुक्काको प्रयोग नै बेसी।*
*कोही बोल्दै गर्दा व्यस्त मोबाइल खेलाउन।*
*हुन्छ व्यस्त कोही, एक-आपसमा गफगाफ गर्न।*
*राति अपुग निद्रालाई, पुऱ्याउन्छन् धित मरून्जेलसम्म*
*एकले अर्कालाई व्यंग्य गछ्न् मुटुमा तीर रोपेजस्तै गरेर।*
*हुल बाँधेर घेर्छन् रोस्टम कहिले।*
*कहिले गर्छन् नारा, जुलुस खुलामञ्च सम्झेर।*
*पाए गर्छन् होला संसद् भवनमै, ढुंगामुढा र मल्ल युद्ध नै।*
*खान्छन् पुरूष सासदले सुत्केरी भत्ता।*
*लिन्छन् बहाल भत्ता काठमाडौंमा आफ्नै घर भएकाले पनि।*
*भएको छ, संसद् भवन बसिबियालो गर्ने ठाउं जस्तै।*
*लाग्छ, संसद् भवन वृद्धाश्रम जस्तै।*
*गर्छन् मस्त रमाइलो पाँच वर्षसम्म*
*ढुक्कसँग पाँच वर्षको पक्का छ, स्थायी जागिर।*
*न छ कुनै पीर र चिन्ता पाँच वर्षसम्म कुनै*
*त्यसपछि पत्याउने हो कि होइन जनताले*
*तर, पक्का खडा गर्छन् होला, काठमाडौंमा घर र गाडी।*





# राष्ट्रिय सोझो घोषणा गर सरकार

गोविन्दवहादुर प्रधान 'क्षितिज'

मैले बिहे गरेको ६ महिनासम्म पनि
मेरी बेहुली केटा हो कि केटी
फिटिक्कै पत्ता लगाउन सकिनँ
म कति सोझो हो गाँठे !
अरु साथीभाइले बिहे गरेको
तीन दिनभन्दा बासी राख्दैनथे
मैले छुन खोज्दा पर-पर हुन्थी
मुखाभरि थिएन एउटै केश
काटीकुटी दुरूस्तै केटीको भेष
कम्मर छाम्दा पनि गर्धन छाम्दा पनि
लाग्थ्यो उनी मेरी प्रिय मायालु हो
अरु थोक त छाम्न दिए पो
नुहाउनलाग्दा कपडा फेर्न लाग्दा
मलाई टाढै बस्नु भन्थिन् लाज लाग्छ
मलाई नजिक जान दिए पो पत्तो लाग्छ
सँगै खाइयो ६ महिनासम्म सँगै डुलियो
मन-मुटु मिले पनि सँगै सुत्न दिए पो
साह्रै मन लागेर मैले सम्पर्क गरौं भनेको
अहिले हैन खै विधि पुगेको उसले भनेको
एक दिनको कुरा हो ऊ रहेछ ट्वाइलेट गएको
चुकुल नलाई बसेको रहेछ सबै छर्लंगै देखेको
म त सातछक्क परेको अनि थाहा भो सबै
मैले तामझामका साथ हर खुसीयाली साथ बिहे गरे
पाहुना, इष्टमित्र, शुभचिन्तक बोलाई रमाइलो गरेको
लास्टमा सबै सपना चकनाचुर ऊ त केटा पो भएको
म त साह्रै अन्यायमा परें पीइडित भएर
मलाई यस वर्षकै राष्ट्रिय सोझो घोषणा गर सरकार ।

# रिस

प्रदीप ढकाल

रिस एकान्न रिस
रिस दुना गाली

रिस तियाँ झगडा
रिस चौका हानाहान

रिस पन्जा लुछालुछ
रिस छक्का रक्तपात

रिस साता मुद्दा
रिस आठा अदालत

रिस नवा जेल
रिस दसा पछुतो









जितु नेपाल (मुन्द्रे)

# नेताहरूको टिकटक



**प्रधानमन्त्री प्रचड**

*गीत : के लत बस्यो मलाई...*

के लत बस्यो मलाई कहिले सुधार हुन्छ
एक दिन प्रधानमन्त्री नहुँदा, एक दिन प्रधानमन्त्री नहुँदा
एक दिन अधक्ष्य नहुँदा, एक दिन अधक्ष्य नहुँदा
यो दिल्ल बिमार हुन्छ, यो दिल बिमार हुन्छ ।
साथी रहेछन् देउवा...
साथी...साथी... रहेछन् देउवा...देउवा ...
हरपल सवार हुन्छन्
कुर्सी पाहुना रहेछ छोड्नै हतार हुन्छ
के लत बस्यो मलाई ....

**शेरबहादुर**

*गीत : नबिर्से तिमीलाई नपाएँ तिमलाई*

नबिर्से केपीलाई न पाएँ माधवलाई
बिनाअर्थ दिलमा सजाय प्रचण्डलाई
यो पार्टी पहिलो यो पार्टी पहिलो
यो पार्टी पहिलो सरकार खुस्कियो २
बालकोटक (बार्दली) बाट भेट्न बोलाएँ तिमीलाई
बालकोटबाट भेट्न बोलाएँ तिमीलाई
नबिर्से तिमीलाई ....

**केपी ओली**

*गीत : बोल माया... सकम्बरी*

नेकपा एकता कल्ले गर्दियो?
बालुवाटारमा सवारी कस्ले गर्दियो?
बालकोटको बार्दलीमा कसले बोलायो?
दोस्रोपटक प्रधानमन्त्री कस्ले बनायो?
बोल कामरेड, बोल कोमरेड ...

**माधव नेपाल**

*गीत : तिम्रो मायाले मलाई पीर दियो...*

ललिता निवासले मलाई पीर दियो
चर्कियो काण्ड मोहीको फन्दा ऐया... ऐया...
कामरेडको मायाले मलाई पीर दियो २
प्रधानमन्त्री भन्नु के रैछ र होउन्जेल शान
नारायणकाजी ठीक पऱ्याछन् पक्रिएर लान
प्रचण्डको मायाले मलाई पीर दियो
अनुसन्धान ऐया... ऐया...
छानबिन ऐया... ऐया...
अदालको आदेश ऐया ....

**नारणकाजी**

*गीत : दर्शन सलाम*

रायमाझी र खाँड मात्रै कति समाउँ म ?
ढल्छ सरकार गर्ल्याम्म भाउजूलाई
दर्शन सलाम... दर्शन सलाम... हो...
दर्शन सलाम, सानातिनालाई फलाम ठूलालाई दर्शन सलाम
चुनावमा सँगै गाको कमिसन खाको
शपथ खाको ...
उपप्रधानमन्त्री जहिले नि आफ्नै पार्टी (सरकार) को
दर्शन सलाम हो दर्शन सलाम
सानालाई फलाम ठूलालाई दर्शन सलाम

**बालेन शाह**

*गीत : चिन्ता छैन केही*

ए होई बसेको न्याप गीत गाएर
मेयर बनें भोट धेरै पाएर
चिन्ता छैन केही ...
मलाई मन्त्री पनि यही मलाई उपप्रधान पनि यही
मलाई सांसद पनि यही
निरीक्षण जाँदा डोजर लगेर हान्छु
मलाई गृह पनि यही मलाई परराष्ट्र पनि यही
आहोई जनता पनि छन् कुरा बुझ्दिनी
लाइक कमेन्ट शेयर धेरै गर्दिनी
चिन्ता छैन केही
मलाई मुख्यमन्त्री यही मलाई अर्थ पनि यही
मलाई सञ्चार पनि यही

**रवि लामिछाने**

*गीत : मे तो रास्तेपे जा रहा था*

मे तो चितवन जा रहा था
मुझे भोट धेरै आ रहा था
मे तो बालकोट जा रहा था
मे तो उपप्रधान खा रहा था
हे बालकोट जा रहा था, गृह खा रहा था
साइरन घुमा रहाथा
मुझे झुटा मुद्दा लगातो मे क्यो करूँ ?

**हर्क साम्पाङ**

*गीत : तिमी जानी सिलगुढी म जाने सिक्किमतिर*

मेयर भएँ आज म नि बाटोमा भोट माग्दा पनि
उभिएछु आफ्नै माटोमा बिजी म नि मोबाइलमा झुन्डिन्छु
कति लेखेको नभन
तर, मलाई परवाह छैन ढुंगा बोग्दै फुर्सद छैन
गीत पनि गाउँदै छु है, बिरूवा रोप्न धाउँदै छु है जनताले के भनिरहेछौ है
चित्त बुझाउँछु स्ट्याटस ठोकेर
अरु जानी भ्रमणतिर म जानी खोल्चातिर
अरु जानी विदेशतिर म जानी खोलातिर



शिवशंकर रिजाल
(जोगिन्दर पानवाला)

# चुनाव पुराण

२०७९ सालको संघीय र प्रदेश सभाको इलेक्सन । कोही भए रियाक्सन, कोही भए फ्याक्सन । केही संघीय क्षेत्रबाहेक १ सय ६५ निर्वाचन क्षेत्रमै बन्धन । उता हेरे राप्रपा-एमालेको बन्धन, यता हेरे कांग्रेस-माओवादीवादी-राजपा र समाजवादीको गठबन्धन । कसैले लगाए रातो चन्दन, कसैले गरे रक्षाबन्धन ।

हामी जनताको जिन्दगी नेताहरूलाई भोट हालेरै जाने भो । जित्नेले मजाले खाने भो, उसैले लाने भो । लाखौंले जित्ने चुनाव करोडौं नघाए । अब करोडौं करोड खर्च गरेर चुनाव जितेपछि जित्नेले के गर्ला ? ल भन्नुस् त घरको भकारी नभर्ला ?

हाम्रो देशमा भ्रष्टाचार मौलायो भनिन्छ । चुनावमा एक उम्मेदवारको करोडौं खर्च गरिन्छ, अनि भ्रष्टाचार नमौलाए त्यसको ससुरो बौलाउँछ । जित्ने सलबलाउँछ । हार्ने बौलाउँछ । यस्तै छ जनाव, हाम्रो देशको चुनाव ।

जित्ने घुम्ने मेचमाथि । हार्ने त कता हरायो हरायो, खोज न साथी । जित्ने हास्दै सदनभित्र छिर्ने । हार्ने रूँदै घरभित्र पिर्ने । जित्नेले माइक लिँदै बोल्न थाल्यो । हार्नेले आफ्नाले नै हरायो भनेर पोल खोल्न थाल्यो । जित्ने घुम्ने कुर्सीमा बस्ने । हार्ने मुढाबाटै खस्ने । जित्नेले जुँगाको ताउ मोस्न थाल्यो । हार्नेचाहिँ सुत्केरी भैंसी जस्तो उठ्न र बस्न थाल्यो । जित्ने भन्छ म बादशाह । हार्ने भन्छ म कहाँ-कहाँ । जित्ने हिँड्न थाल्यो हुइँकिने कारमा । हार्ने भए म बेकारमा । जित्ने भयो सिकन्दरवाले । हार्ने भयो काले । जो जिता ऊ सिकिन्दर । जो हारा ऊ बन्दर । यही बोल्ने पानवाला जोगिन्दर ।

हार्नेमा ठूलो हार भयो । भक्तपुरबाट महेश बस्नेत नि बहार भयो । तनहुँबाट आएको प्रदीप पौडेलले काठमाडौंमा इतिहास रचाए । ईश्वर पोखरेललाई पानी खान नदिई थाङ्नामै सुताए । उता, दाङमा शंकर पोखरेलको पनि लज्जास्पद हार । हे ईश्वर, महेश र शंकरको पनि के भयो बेहाल । सधै हारिरहने महन्त ठाकुरले पनि चुनाव जिते । गठबन्धनका उम्मेवारले त कति घिचे घिचे । सप्तरीमा सीके राउतले उपेन्द्रलाई सुताए । बाराले उपनिर्वाचनमा जिताए । रवि लामिछाने र स्वर्णिम वाग्लेले कांग्रेस र एमालेलाई मुताउनुसम्म मुताए । सधैं हार्ने कृष्णप्रसाद सिटौला यो साल पनि झापामा ढले । हारिरहने विश्वप्रकाश धेरै मतान्तरले चुनाव जिति धपधप बले । सुजाता कोइरालाको लज्जास्पद हार । शेखर कोइरालाले पाए यस वर्ष मोरङको प्यार । महेन्द्र राय यादवले चुनाव जिती सिन्दुर जात्रा मनाए । राजेन्द्र महतो आफ्नै गृह जिल्ला सर्लाहीमा चुनाव हारी नराम्ररी गनाए । माकुनेले पाटी फोडेर पनि रौतहटबाट चुनाव जिती सदनतिर गए । मकवानपुरबाट सूर्यमा चुनाव लड्ने कमल थापा सुतेकोसुतै भए । डीना उपाध्यायले पनि चुनाव हारिन् । पूर्वसभामुख ओनसरी घर्तीमगर काठमाडौंमा नराम्रोसँग पछारिइन् । अर्को हारको व्यथा ललितपुरमा पम्फा भुसाल । पीर नगर्नोस् यस्तै हो अब जित्नुपर्छ २०८४ साल ।

ओखलढुंगावासी गाउँ-गाउँ वडा-वडा, जितेर आए रामहरि खतिवडा । सबैले हार्छन् भन्ने गोकुल बाँस्कोटाले पनि चढे सेतो घोडा । सधैं हार्ने तर जिते अर्जुननरसिंह केसी । वर्ल्डकप जितेको जस्तो भयो रेशम चौधरीलाई, ऊ भयो अब मेसी । विक्रम पाण्डे पनि भए चितवनबाट विजय, वहालवाला गृहमन्त्रीको स्यन्देहीमा पराजय । चितवनबाट चुनाव हारिन्छ भनेर प्रचण्ड गोर्खाबाट लडे । विष्णु पौडेलले पनि झीनो मतले विजयको शिखर चढे । अर्घाखाँचीबाट चुनाव जित्ने टोपबहादुर रायमाझी, अहिले जेलमा छ रे थुक्कारी पाजी । बाँके र बर्दियाबाट चुनाव जित्ने किशोरसिंह राठोर र सञ्जय गौतम भैगए काजी । चुनाव हार्छ भन्ने गगन थापाले ह्याट्रिक गरे । रेशम चौधरीको बाउ र बूढीले बर्दिया र कैलालीबाट विजयको घैंटो भरे । सुर्खेतबाट पूर्णबहादुर खड्का, बाजुराबाट बद्री पाण्डेले पनि पड्काउनुसम्म पड्काए ।

सधैं जित्ने विजय गच्छदार पनि नराम्रोसँग भए जिरो । कञ्चनपुरबाट एनपी साउद चुनाव जितेर भए हिरो । पुष्पा भुसाल अर्घाखाँचीमै लडिन्, तेह्रथुमबाट चुनाव जिती सीता गुरूङ अगाडि बढिन् । राष्ट्रपति हुने आसमा बाबुराम भट्टराई पनि थचारिए, इलामबाट झलनाथ खनाल नराम्रोसँग पछारिए । धनुषाबाट महेन्द्र यादव चुनाव हारी कुनामा पसे । पर्साबाट चुनाव जित्ने रमेश रिजाल मन्त्रीको कुर्सीमा बसे । देवेन्द्रराज कँडेलको ठूलो हार । रवीन्द्र मिश्रले पनि पानी खान पाएनन्, गुहार गुहार । जुम्लाबाट ज्ञानेन्द्र शाही आए । कत्तिले त स्रोह श्राद्धको पिण्ड नै खाए ।

शेरबहादुरले सात चोटी चुनाव जिती इतिहास रचे । झापाबाट केपी शर्मा ओली पनि राम्रोसँग बचे । कत्तिलाई भयो काल, कयौं नेता चुनाव जिती भए मालामाल । ॐ नमो नमोम् स्वाहा, गठबन्धन भयो हवा हवा । बहुमत ल्याउछु भन्ने एमालेले पनि खायो खिँचडी र मालपुवा । कांग्रेसले केही भए पनि राख्यो मन । एमाले गयो पाँच वर्षका लागि गुप्तावास वन । गठबन्धन गरेर चुनाव लड्ने माओवादी त खत्तमै भयो झन् । जनमोर्चा एक सिटमा थेचारियो । के-के न गर्छु भन्ने समाजवादी पनि नराम्रोसँग पछारियो । मजदुर किसान पार्टी एक सिट, त्यो पनि भक्तपुर मात्र । विवेकशील साझा पार्टीको त जात्रैजात्रा ।

राष्ट्रिय स्वतन्त्र पार्टीले गर्नु गर्‍यो । सीके राउतको जनमत पार्टीले पनि मधेश प्रदेश भर्‍यो । नागरिक उन्मुक्ति पार्टीले पनि









गऱ्यो कैलाली, बाँके र बर्दिया । रेशम चौधरी आप भि क्या-क्या कर दिया । राप्रपाले सोचेकोभन्दा बढी जित्यो । राप्रपा नेपालले कुकुरको लिँड नै घिच्यो । तमलोपाले लोप्पा नै खायो । भाजपाको भाइ राजपाले फाटफुट जिती मुखबाट ब्यायो । सद्भावना पार्टी भयो स्वाहा । दलित जनजाति र लोकतान्त्रिक उन्नति पार्टीले खायो त्यसको बाउको श्राद्धको पिण्ड र पालपुवा । त्यही पनि नेता भनाउँदो चाहिं ज्यादै नै खोक्ने, थुइक्क तेरिमा टोक्ने । लोसपालाई पनि जनताले लोपारे ।

राजेन्द्र महतोलाई त झन् कोपार्नुसम्म कोपारे । लोसपा और राजपाको जनता ने लेखा दिया, क्षेत्रीय पार्टीको मधेश ने देखा दिया । सीके राउत बल गया । उपेन्द्र और राजेन्द्र भि चल गया । हम गलत बात तो नही बोल रहे हे भैया । चल्ना था चल गया । बोल्ना था बोल गया । बोल बोल के भि गल गया । जैसा करनी ओइसा मरनी, जानी दुस्मन जानि मे । मधेस प्रदेश से आप लोग गयल भयस पानी मे । कि कसो भतिजा, संघीय र प्रदेशसभाको यही हो नतिजा ।

हार्नेले हारे, जित्नेले जिते । हार्ने र जित्ने दुवैलाई कामना, सबै मिली देश बनाऔं सबैलाई मंगलमय शुभकामना ।



















# हलीबाउसे मन्त्रीमण्डल

**विश्व शाक्य**, पोखरा

'ह..ह..ह ऽऽ...! ह..ऽऽ.. हमाले ह..ऽऽ.., हो..हो..हो .....! हो..ऽऽ.. होमाले हो..ऽऽ.., होतारे हो ऽऽ... !'

असार मास । जतासुकै रोपाइँको चापाचाप । माचामाच । यो बर्खाको मौसम, खेतीको मौसम बिहानैदेखि सिमसिमे झरी खेतहरु हिलाम्य त हुने नै भए । बाटाहरु पनि हिलैहिलो । खेततिर जतासुकै 'हो माले हो र हो तारे हो, ह हहको गुञ्जन । कहींकतै बिकासे गोरु ट्याक्टरहरुको घ्यारघ्यार कर्कश आवाज ।

हर्षमान बा झरीको दिन पनि आफ्नो खेतको अग्लो आलीमा बसेर हलीहरुको 'हो हो र ह ह..ऽऽ...' को ध्वनिसँगै खेताला बाउसेहरुको ठट्टा रमाइलो मग्न भएर सुनिरहेका थिए । यस्तैमा एक बाउसे बौद्धमान बासामु आएर भने- 'होइन हो साहुबा ! असार पन्ध्रको दिन खेत आएर यस्सो हिलो पनि नखेल्ने हो कि क्या हो ? कुर्चा खोसिएका नेताझैं के काँल्लामा टुक्रुक्क बसिरहनु भा ?'

'काँल्लामा टुक्रुक्क नबसेर के गर्नु त ? हर्षमान बाले पनि आफ्नै पाराले जवाफ दिँदै भने- 'देशमा तारे, माले सबै सर्वदलीय सरकार बनाउन जुटिरहेका छन् तिमीहरु यहाँ गोरुको पुच्छर निमोठ्दै हो तारे हो' र 'हो माले हो' भन्दै छौ । यो सरासर अपमानजनक कुरा भएन ? कत्रा-कत्रा देशका जल्दाबल्दा समस्या समाधानका लागि जुटिरहेका बेला यसरी तारे र माले भन्दै नेताहरुको अपमान गर्ने ? यो त सरासर बदनियतपूर्ण भयो नि !'

'साहुबा पनि कस्तो कुरा गर्नुहुन्छ ?' एक खेतालाले हर्षमान बालाई सम्बोधन गर्दै भने- 'खेतमा हलीले गोरुलाई 'ह माले ह !' र 'ह तारे ह !' नभने के भन्ने त ?'

'के भन्ने, के भन्ने !?' एकछिनको मौनतापछि हर्षमान बाले भने- 'यसो भन्ने, ह.. ह..ऽऽ...हमाले, ह..ह..ऽऽ..ह तारेको सत्ता ह..हऽऽ..गोरु, ह..हऽऽ.. पशु'भन्ने । यसो भन्दा पशुको इज्जत पनि भयो गोरुको नाम पनि रह्यो ।'

हर्षमान बाको कुरा सुनेर हलीबाउसे र खेतालाहरु सबै गललल हाँसे । केही हली 'ह ह गोरु, ह..ह.. पशु' भनेर गिल्याउन थाले । हली र बाउसेले हर्षमान बालाई गिल्याउन थालेपछि बाले अर्थभेद खोल्दै भने- 'बजिया !, तिमी हली, बाउसे, खेतालाहरु जीवनभरका हली, बाउसे, खेताला नै हौ । कुरोसुरो बुझ्नु छैन त्यत्तिकै गिल्यायो, हाँस्यो, भयो ?'

'अनि कुरो के हो त ? साहुबा भन्नोस् न त ?' अलि परको बाउसेले जिज्ञाशा राख्दै भने- 'साहुबाले कुरो स्पष्ट पारिदिए पो हामी हलीबाउसाले कुरो बुझ्छौं त नि ।'

'सुन मोरा हो !' हर्षमान बाले कुरो स्पष्ट पार्दै भने- 'कुरो के भने नि, देशको बढ्दो जटिल समस्या आर्थिक मन्दी, हिंसा, द्वन्द्व समाप्त पार्न र देशमा शान्ति बहाली गर्न एउटा सशक्त मिलिजुली सरकार बनाउन लागिपरिरहेको तिमीहरुलाई थाहै छ । अब अदालतले अक्षम भनेर घोक्रेठ्याक लगाएको प्रधानमन्त्रीलाई फेरि सक्षम बनाउन चुनाब त पर्खनै पऱ्यो । प्रधानमन्त्रीको कुर्चीलाई भएभरको गंगाजलले धोइपखाली गरी सक्षम बनाए । अब सर्वदलीय सरकारलाई पनि बहुमतको सक्षम सरकार बनाउन प्रधानमन्त्रीले भरसके प्रयास गरिरहेको तिमीहरुलाई थाहै छ । मन्त्री हुन चाहनेहरुले खुट्टा उचालेकाउचालै छन् । प्रधानमन्त्री भने भ्रष्टाचारमा मुछिएकाहरुलाई मन्त्री बनाउन्न, बनाउन्न भनेर ढिपी लियालियै छन् । अब उनी एक जनालाई सक्षम बनाउन त कति कसरत गर्न पऱ्यो भनेसि उनले जम्बो मन्त्रीमण्डल त्यै पनि भ्रष्टाचाररहित व्यक्तिहरुको बनाउन पर्दा कति हम्मे-हम्मे परेको होला ? हामी सहज अनुमान गर्न सक्छौं ।'

'अनि के साहुबा!? हाम्रो जस्तो देशमा भ्रष्टाचाररहित व्यक्तिहरुको मन्त्रीमण्डल बनाउन सम्भव छ ?' एउटा हलीले जिज्ञाशा राख्यो ।

'त्यै त, त्यै त भन्दै छु बजिया !' हर्षमान बाले स्पष्ट पार्न खोज्दै भने- 'बजियाको घ्याम्पामा बल्ल घाम लाग्या जस्तो छ । अब हेर न, हाम्रा प्रधानमन्त्रीले भ्रष्टचारमा शून्य सहनशीलता भनेर भ्रष्टाचारमा सामेल भएका एक जना पनि नेतालाई मन्त्रीमण्डलमा राख्दिनँ भनेर बौराउँदै हिंडिरहेका छन् ।

उता अर्का खाल्टे नेता ठेट्ना अधकाँचेहरुलाई मन्त्री बनाएर देश हाँक्न सक्तैनन् भनेर कुर्लिरहेका छन् । अब कसको कुरा सुन्ने !? कसको कुरा नसुन्ने !? आधाकाँचेहरुले देशको यत्रो जल्दोबल्दो समस्या समाधान गर्न नसक्ने पनि साँचो हो । भ्रष्टाचारीहरुले देशमा अरु गम्भीर समस्या खडा गर्ने पनि साँचो हो । यसो भनेर अब प्रधानमन्त्रीले भ्रष्टाचारै नगरेका मान्छे खोज्न कहाँ जाने ? यिनै स्वच्छ छविका हलीबाउसे र खेतालालाई समावेश गराएर बृहत्तर भ्रष्टाचाररहित मन्त्रीमण्डल गठन गर्छु भन्यो भने भोलि तिमीहरु मन्त्री नबन्लाउ भन्ने के भयो र ? त्यै भएर मोरा हो ! यी गोरुहरुको पुच्छर निमोठ्दै 'ह..ऽऽ. माले, ह..ऽऽ..। 'ह..ऽऽ. तारे ह..ऽऽ..।' नभन् भनेको ।'

हर्षमान बाको कुरा सुनेर सबै हली, बाउसे र खेतालाहरु आश्चर्य मान्दै एकैस्वरमा जिज्ञाशा राखे- 'हो र !?'

## परिचय

**मिस्टर फन्टुस**

नाम : कोरोना
थर : डेंगु
उमेर : उन्नाइस
पेसा : महामारी फैलाउने
बासस्थान : मानव शरीर
भेट भएको खण्डमा : १० देखि १५ दिन परिवारबाट छुट्टै बस्नुपर्ने देखिन्छ ।
हुलिया : भेट्ने बितिक्कै ज्वरो, रूघाखोकी
ठेगाना : चीनबाट जन्म भै विश्वव्यापी भ्रमणमा हिंडडुल गर्दै रहेकाले सचेत र सावधान रहनुहोला ।

सामाजिक दूरी कायम गरी आफू बचेर अरूलाई पनि बचाउनुहोला । हिंड्दा मास्क अनिवार्य लगाउनु पर्नेछ । सकेसम्म भीडभाड कम हुने कार्य गर्नुपर्दछ । लामखुट्टे र लामखुट्टिनी यी दुई लोग्ने-स्वास्नीबाट निगरानीका साथ साथै बचेर हिंड्दै दिनचर्या बिताउनुपर्ने देखिन्छ ।







# भन्सारमा सुनको हात्ती



उमेश गुइँठे
पशुपति, देवपत्तन

बेलुकी लखतरान भएर घर पुगें । एक गाँस तातो भात खाएर सुत्ने बेलामा श्रीमतीको महाभारत शुरु भयो । उही रौद्ररूप । 'हरे... समाचार सुन्दा पनि थक-थक लागेर आउँछ । कस्तो साइतमा यस्तो हरि तन्नमलाई बा आमाले हात थमाएर पठाएछन् । साउने सोमबार पनि धाँटी बुच्चै गयो । तीज पनि त्यत्तिकै जाने भो । दशैं-तिहार पनि यस्तै त होला । हैन यो सय किलो सुनको समाचार कति पढ्न सक्छन् हँ, यो रेडियो टिभीले कान पाक्ने गरी ।'

'कस्तो कंगालसँग परिएछ । बरू बूढो भए पनि शोभराजसँग बिहे गरेको भए पनि हुन्थ्यो । अहिले भित्रिएको जाबो सय किलो सुनको के कुरा उसले त एयरपोर्टको भन्सारबाट हात्ती नै छिराइदिन्छु भन्थ्यो । हेर क्या गज्जब हुन्थ्यो, सुनको हात्ती ? दश किलोको छड्के तिलहरी लगाउँकी... एक किलोको बुलाखी.... कानको लोतीले धान्ने भए त एक/एक किलोको टप कतै नजाओस्... रानीहार पन्ध्र किलो घटीको के बनाउनु... खुट्टामा सुन लगाउन हुन्न भन्छन्... आ... म त लगाइदिन्थे डेढ/डेढ किलोको पाउजु । मंगलसूत्र, जन्तर, सिक्री, चुरा र ब्रासलेट त जति किलोको लगाए पनि हुन्थ्यो ।'

'के गुर्न विवाहमा दिएको त्यो जाबो मट्यांग्रे तिलहरी पनि कुन बैंकमा बन्धकी छ, थाहा छैन । लिलाम नै पो गरिसक्यो कि ।'

'हैन ए बूढा, अहिले आएर त तिमीले सुन ल्याउने तरिका थाहा पायौ होला नि । स्कुटरको ब्रेक सु भनेर क्विन्टलका क्विन्टल सुन भित्राउन के मैले तिमीलाई छेकेको थिएँ ? न त प्रहरीले नै रोक्यो न त भन्सारका कर्मचारी र एक्सरे मेसिनले नै । सिनामंगलको सडकसम्म त आयो नि । के गर्नु.... त्यहाँसम्म ल्याइदिए त घरसम्म त मै पनि ल्याउँथे । जाबो एउटा सुन गाल्ने मेसिन ल्याएर भटाभट गाल्न हुंदैनथ्यो । अनि त जति किलोको गहना लगाए पनि हुन्थ्यो ।'

सही नसक्नुभयो । मैले भने- 'ए... सुन ल्याउने र गाल्नेमै ध्याउन्न छ हैन तेरो । बूढोले जेलको हावा खान्थ्यो भन्ने कुराको भने ख्यालै छैन हैन... । यसले सुन सुन भनेको सुन्दा त यो मास्टरी जागिर खाएर बस्नुभन्दा त सुन भरिया नै हुनपर्ने रहेछ । कम से कम म जेल परे पनि यसले त टाउको निहुरिने गरेर लगाएर हिंड्थी याँ बडेमानको तिलहरी ।'

'अँ... पर्छन् जेलमा ? बिरामी भएको निहुँ पारेर अस्पतालमा फाइभ स्टारको बसाइ बस्छन् भन न । ललिता निवास काण्डमा परेकाहरू ज्वरो आएको निहुँमा अस्पताल भर्ना भएर फाइभ स्टार होटलको मोज गरिरहेको हामीलाई थाहा छैन र ?'

मलाई झोंक चल्यो, मैले भने- 'धेरै जोडले सुन सुन भनेर नकरा । सुन काण्डमा मुछिएका मान्छे अझै पत्राउ पर्दै छन् । सुराकी कमिसनको लुछाचुँडीमा सीआईबी र राजस्वको तँछाड मछाड भएको समाचार त सुनिस् होला नि । संगठित जालो नै पत्ता लगाउने रे । अझै ठूला माछासम्मलाई पत्राउ गर्ने रे... सुनको कुरा सुनेर बूढाबूढीको संगठित जालो रहेछ भनेर तँसँगै मलाई पनि लैजाला पुलिसले ।'

'ओहो... लाँदैन लाँदैन तिम्लाई । हाम्ले समाचार नसुनेको हो र । ठूला माछा भनेको को हुन् हामीलाई थाहा छैन र ? .हेरन कत्ति न आफूलाई ठूला माछा सम्झेको । तिमी त भुरा माछा हौऊ भुरा । त्यो पनि साउने भेलको ।'

'भन्ने नै हो भने तिमी त हुतिहारा नै हौ । न त एक क्विन्टल सुन बोक्न सक्यौ न त ललिता निवासको साढे दुई आना जग्गा नै आफ्नो नाममा लिन सक्यौ । भुटानी शरणार्थी बनाएर अमेरिका पठाएर मानव तस्करी गरी पैसा कमाउने त टाढाको कुरा । ललिता निवासको जग्गा सबैले भाग पाए । नेता हुन् या व्यापारी, न्यायाधीश हुन् या कर्मचारी... मोही अनि बिचौलिया । तिमीले एक दाम हात पार्न सक्यौ ? उहाँ भने भैंसेपाटी र बूढानीलकण्ठ त मेरो दाहिना छन् भन्थ्यौ ।'

'देखिनस् अहिले पत्राउ पर्ने डरले धमाधम जग्गा फिर्ता गरेको ?' -मैले भने ।

'भो... भो... त्यस्ता करा नगर मसँग । जे भए पनि आठ/दश वर्ष त हाम्रा पनि प्रधानमन्त्री निवास छेवैमा घडेरी छ भनेर लालपुर्जामा फोटो टाँस्न त पाइन्थ्यो नि ।'

बूढीको कचकच सुन्दा सुन्दै निदाइए छ । बिहानीपख ब्युँझिँदा त बूढी सपनामा बरबराउँदै थिइन्..... तान् तान्..... जोड्ले तान्... । जोडले टेप तान् । .....हैन तिमी किन कुरा बुझ्दैनौ जति बढी नाप्यो त्यति पाइन्छ । अलि तान् न एक रोपनी त पुऱ्याउन पऱ्यो नि । .....ओड्ने तान्दा तान्दै बूढी खाटबाट भुइँमा झरिन् । एकक्षण कोठामा सन्नाटा छायो । पुर्पुरोमा हात राखेर बूढी फतफताउन लागिन्, यो काठमाडौंमा घडेरी जोड्न पनि गाह्रै रैछ नि है बूढा ?



## छोटोले भुल्दोरहेछ

जगन्नाथ मिश्र

जवान् भएपछि
बाल्यकाल भुल्दोरहेछ

बुहारी भित्र्याएपछि
बाउ-आमा भुल्दोरहेछ

छोरा-छोरी जन्माएपछि
दिदी-बहिनी भुल्दोरहेछ

राम्री श्रीमती पाएपछि
साथीसंगी भुल्दोरहेछ

धन कमाएपछि
गरिबीलाई भुल्दोरहेछ

बुढेसकाल लागेपछि
हिजोका कुरा सम्झँदोरहेछ ।

## छोरीको डर

नानी साम्राज्ञी

छोरीलाई हरेक मोडमा डर
एक्लै हिंड्दा सुनसान बाटोमा डर

भीडभाडमा गुन्डाको डर
हावा चल्दा दोपट्टा उडाउने डर

बचपनमा बाबा-आमाको डर
जवानीमा भाइले कुरा लाउने डर

बिहेको कुरा चल्दा एउटा डर
हुनेवाला सराबी पर्ला भन्ने डर

बिहे भइसकेपछि अर्को डर
सासू छुच्ची पर्लिन् भन्ने डर

वैवाहिक जीवन जिउने क्रममा
स्वतन्त्रता नपाइएला कि भन्ने डर



# हात्ती आयो, हात्ती आयो फुस्सा ...!



विष्णुलाल श्रेष्ठ, तनहुँ

झमक्क साँझ पर्न लागेको थियो, पल्लो टोलका मनवीरे माइलो हस्याङ फस्याङ गर्दै नौ रेक्टर स्केलको भुइँचालो आएर धर्ती नै फाट्यो, आकासै खस्यो झैं गरेर एक शासमा दौडँदै मेरो आँगनमै आएर बजारियो । धन्न बस्तुभाउलाई कुँडो पकाउने चम्कामा पुर्पुरो ठोक्किएर भुतुक्कै भएन ।

ए सुनवीरे काका ? सुनवीरे काका ?

म फटाफट बुइगलबाट ओर्लेर आँगनमा आइपुगें । यो मनवीरे बज्जिया के भन्न आयो, किन यस्तरी आत्तियो, अचम्मै लाग्यो । खेती किसानी गरे पनि मनवीरेले जहान छोराछोरी पालेकै छ । यसले उति बेला पाँच कक्षा पढेकै हो । यताउतिको खबर खाबरमा निकै चासो राख्छ, आफू परियो मिडिल स्कुलको मास्टर । त्यही भएर केही नयाँ कुरा सुनाउनुपरे नि आउँथ्यो, सोध्नुपरे नि आइहाल्थ्यो । यति विधि आत्तिएको त कल्यै देखेको थिइनँ ।

ठेस लागेर लडेको मनवीरेलाई उठाउँदै भनें- 'ए मनवीरे के भयो र तँलाई यस्तो विधि आत्तिएको हँ ?

हत्तेरी म त कस्तो बेसुरमा दौडेर आएछु काका ? किन के भयो र बज्जिया ?

ल, तपाइँलाई क्यै नि थाहा छैन काका ?

किन यसरी अतालिएको ? कि तेरा हलगोरू, गाईभैंसी लम्की स्किनले उत्तानो परे ! भएभरका बाख्रा सोत्तर भए कि क्या हो ?

हत्तेरी काका पनि कुरै नबुझी प्याच्च बोल्नुहुन्छ भन्या ? काँको लम्की स्किन र झम्की स्किनको कुरा गर्नुहुन्छ ? त्यस्तो क्यै नि भा छैन ।



अनि के हो भन् न त ? भन्दै नभनी कसरी थाहा पाउनु ? कि तलाई पनि ललिता निवासको चार आना जग्गा भागमा परेको खबर आयो ? या सय किलो सुनमा तेरामा नि तोला-मासा उछिट्टिएर आइपुग्यो ?

हे दैव ? काँको कुरा काँ पुर्‍याउनुहुन्छ यो काका पनि ?

ए मनवीरे ! कि तेरो छोरो नक्कली भुटानी शरणार्थी बनेर अमेरिका छिर्ने भो ?

काका पनि के कुरा गर्नुहुन्छ ? ५० लाख दिन सकेको भए आफैं भासिन्थें नि अमेरिका ।

यो पनि हैन भन्छ, ऊ पनि हैन भन्छ ? अनि के नयाँ समाचार लिएर आको त ?

लौ... ! काकाले त्यति पनि थाहा पाउनुभा रहिन्छ ?

ए नीलकण्ठ कन्टके ? तैंले मेरो दिमागै खाने भइस् ? भन् न त ? के हो त्यस्तो कुरा ? कति भूमिका बाँधेको हो ?

भुटानी शरणार्थी काण्डमा भख्खरै एउटा खरदार पक्राउ पर्‍यो रे नि त ? खरदारजस्तो मान्छे पक्रिएसि काकालाई सुनाउँ भनेर दौडेको ।

थुक्क बज्जिया ? के-के न रेछ भनेको त जाबो खरदार समातियो पो भन्छ ? अनि त्यो जैरे खरदार समातियो भनेर नाथे समाचार सुनाउन मेरोमा मुन्टिएको ?

ल ! काका पनि... खरदार समातिएको चानचुने कुरा हो त ?

हे भगवान् ? तेरा बुद्धि ? यो देशमा खरदार समातिन्छ, भरिया समातिन्छ, पाले, साले, पियन समातिन्छ । ढोके, हुक्के, बैठके समातिन्छ, बगैंचेसगैंचे समातिन्छ । खै प्रधानमन्त्री, उपप्रधानमन्त्री, मन्त्री, नेता-उपनेता समातिएका !

ल काका पनि मन्त्री समातिएन ? उपप्रधानमन्त्री समातिएन ? टेके नेता, सचिव समातिएनन् ? कि समाचारै सुन्नु भएन ? बालकिस्ने खाँण, टोपे रायमाझी समातिएनन् ? के कुरा गर्नुभएको ?

अर्को एउटा कुरा सोधम् कि भनेर काका !

के कुरा हो सोध् न !

साँच्चै यो सय किलो सुनको कुरा के हो काका ? पुलिसको सामुन्ने सियो नछिर्ने भन्सारबाट सय किलो सुन छिर्‍यो होला त ! मलाई त पत्यार लागेन ।

तैंले, मैले नपत्यार के गर्ने बाबु ! छिर्नुपर्ने कुरा छिरिहाल्यो क्यारे ! ऐले त सय किलो सुन छिर्‍यो, अब हेर्दै जा, ५ हजार किलो सुनको हात्ती छिर्छ बुझिस् ?

हात्ती नै छिर्न लागेसि पुलिस के गरेर बस्लान् त नि !

के कुरा गर्छ यो । ओहो ! सुनकै हात्ती देख्न पाइयो भन्छन्, यसो छामछाम, छुमछुम गर्छन् अनि टाङमुनि छिर्छन् । त्यत्ति भएसि भएन ?

अब यो सुनको मालिक समातिन्छ त काका !

भुत्रो समातिन्छ ! तेरो बाउ नेपालको भए पो समातिन्छ । काँको धोति हो फुत्काइहाले नि ! अब क्यै हुँदैन मनुवा । दुई/चार दिन नाटक गर्छन् अनि हात्ती आयो, हात्ती आयो फुस्सा... हुन्छ बुझिस् ? यो देशमा धमिजा, लाउडा, ललिता र नक्कली शरणार्थीलगायतका अनेकन काण्ड हुँदै सुनकाण्डसम्म आइपुगेको छ । काण्डैकाण्डको यो प्रकाण्डको देश हो बाबु ! अब यहाँ क्यै हुनेवाला छैन । यसैलाई हात्ती आयो, हात्ती आयो फुस्सा... भन्छन् । सुन्नेलाई सुनको माला, भन्नेलाई फूलको माला, चाइया बेलाँ तुरुन्तै आइजाला । इति शुभम् !

---

# ४ ठोक्काक

केशवराज अर्याल

वृद्ध थर्थर काँप्दै उभिरहे बसमा
एउटी ढल्काउँदै आई कालो चस्मा ।
सबै हेर्दै छु म, तैपनि थिएँ विवश,
के गर्नु त्यही दिन थियो नारी दिवस ।

मैले ठाउँ छोडिदिएँ वृद्धलाई बसाइ
आइफोन चलाउँदै फेरि अर्की कन्या आई
बूढा छेउमै चुइगम पड्काउँदै ऊ मस्किन थाली ।
बूढा बालाई नि नशा चढ्यो, गर्दिए ठाउँ खाली ॥

जनगणना तथ्यांकले मेरो नामै भरेन त,
केटाभन्दा केटी पो बढी छ रेन्त ।
कुनचाहिँ अपराधीले चारओटी स्वास्नी राख्यो होला ?
खै, हाम्रो भागमा त एउटी केटी नि परेन त ।

जिन्दगीको के बयान गर्नु खै,
अरूको भन्दा आफ्नै भलाइ सोच्छन् सबै ।
आज इन्स्योरेन्स वालीसँग दश मिनेट कुरा गरेको,
बाँच्नुमा भन्दा मर्नुमा धेरै फाइदा देखाएर गई

नारी श्रृष्टिकर्ता हुन् नारीको सम्मान गर्नुपर्छ ।
नारी संहारकर्ता पनि हुन्, रिसमा तपाई पर्नुपर्छ ।
चाहिन् भने महिलाले दुई दिनमै लखपति बनाउँछिन् ।
तर, त्यसका लागि तपाई करोडपति हुनुपर्छ ।

# ईमेल ठेगाना र पासवर्ड महात्म्य



सुमनराज ताम्राकार

अहिलेको समयमा स्मार्ट फोन नहुने, इमेल नचलाउने, ई-कमर्स नअपनाउने, लुटुपुटु (ल्यापटप भनेको) नहुने, कम्पुटर नहुने, नेट नचलाउने, फेसबुक टिकटक नचलाउने नेपाली विरलै होला । यति विरलै कि ग्यास्टिक नहुने नेपाली वा लप्पनछप्पन नगर्ने नेता भेट्टाउन जत्तिकै विरलै । इमेल चलाउन होस् वा फेसबुक, टिकटक, इन्स्टाग्राम खाता खोल्न इमेल ठेगाना बनाउन र त्यसका लागि पासवर्ड सिर्जना गर्न आवश्यक हुन्छ नै । यस्तै नौबत आइपऱ्यो, मलाई पनि ।

के हो नि नौबत भनेको ?

नौबत भनेको परिस्थिति भनेको नि ।

नुनदेखि कानुन, उनदेखि चुनसम्म इन्ड्यामै भरपर्नेलाई हिन्दी शब्दावली पनि आउँदैन भनेर कोही पत्याउँछ ? वाहियात ।

जेहोस् मलाई पनि पासवर्ड बनाउनुपर्ने नौबत आइलाग्यो, एकपटक होइन पटक-पटक । कहिले इमेलको, कहिले बैंकको, कहिले एटीएमको, कहिले अनलाइन फर्म भर्नका लागि । एटीएम, सेटिएमको लागि त चार अंक भए पुग्ने रै छ ।

के हो नि ? सेटिएम भनेको ?

यो घरसर, ट्याक्सीस्याक्सी, एक्सरेसेक्सरे भनेजस्तै थेगो हो क्या, थेगो । आई मिन स्ल्याङ्ग ल्याङ्वेज ।

यसो घोत्लिँदा चार अंके पासवर्डका लागि कसैले आफू जन्मेको साल अंग्रेजी वा नेपालीमा राख्ने रहेछ, कसैले कलेजको रोल नम्बर राख्ने रहेछ, कसैले कुनै लक्की नम्बर राख्ने, कसैले यसैलाई उल्टापाल्टा, अगाडि जिरो थपेर, पछाडि जिरो थपेर बनाउने रहेछ ।

फेरि यो पासवर्ड बनाउन अह्राउने जो-कोही निकाय वा संस्थाले बलियो न बलियो पासवर्ड बनाउनका लागि फरमान जारी गरेको हुन्छ ।

के हो नि फरमान भनेको ?

फेरि उही कुरा, नुन र उनकै कुरा, फरमान भनेको निर्देशन, इन्स्ट्रक्सन क्या ।

बलियो भनेको कति बलियो ? फलाम जत्तिको कि स्टिल जत्तिको ।

फलाम, स्टिल जस्तो बलियो भन्या होइन क्या । अनि कस्तो भन्या त ? पख्नु म भन्दै छु । जेहोस् इमेल, सिमेलका लागि भने अलि बलियै पासवर्ड बनाउन पर्ने रै छ ।

कसरी बनाउने त बलियो पासवर्ड ? तेल घसेर कि एक्सरसाइज गरेर ?

त्यसरी होइन भन्या ।

कसरी त ?

कसरी भने पासवर्ड बनाउन आठदेखि १२ वटा लेटर वा अंक चाहिन्छ रे । अनि ? सबै सबै लेटरै लेटर राखेर लटरपटर नबनाउने रे ? अनि ? लेटर र अंकको मिसमास गर्नुपर्छ रे । मिसमास भन्नाले छ्यासमिस ? हो, हो छ्यासमिस, याने कि खिचडी जस्तो, खच्चड जस्तो । कसैले बलियो बनाउने भन्दाभन्दै कमजोर न कमजोर पासवर्ड बनाउन पुग्ने रै छ ।

कतिपयलाई यो पासवर्ड भन्ने गोप्य राख्नुपर्छ, बिरालोले आची लुकाए सरी लुकाई राख्नुपर्छ भन्ने पनि थाहा छैन । कसैलाई पनि थाहा दिनुहुंदैन भन्दाभन्दै पनि 'ए मेरो खाता खोल्दे न, फलानो पासवर्ड राख्दे न है' भन्नेको पनि कमी छैन । पुलिसले समाउन आउँदा 'मेरो बाले भनेको घ्याम्पाभित्र लुकेर बसेको छ भनेर नभन्नु भन्या छ' भने जस्तै गरी । गोप्य भनेसि गोप्य, चड्डीभित्र लुकाएजस्तै, अन्डरवेयरभित्र सम्हालेर राखेजस्तै, पेन्टीभित्रको चिज जस्तै गोप्य । अब त बुझ्यौ होला नि ?

मलाई पनि पासवर्ड बनाउनुपर्ने परिस्थिति आएपछि मैले अरु मानिसको पासवर्ड (विशेषतः इमेल ठेगाना) के-कस्तो हुनेरहेछ भनेर घोतल्न थालें । कसैले आफ्नो नामको छोटकरी बनाएर राख्ने रै छ । यसरी छोटकरीमा नाम राख्नेमध्ये कसैकसैलाई साह्रैगाह्रो हुने रै छ । जस्तै, चित्रकुमार वाग्ले, पुतली तिमल्सिनाले कसरी छोटकरीमा नाम राखेर इमेल ठेगाना बनाउने ? आपद् पर्दैन ? त्यसै गरी कसैकसैले चाहिँ आफ्नो नामलाई अंग्रेजीमा उल्था गरेर (जस्तै बादललाई क्लाउड), कसैले आफ्नो नाम उल्टो तिरबाट, कसैले आफ्नो एवं आफ्नो पार्टनरको नाम जोडजाड पारेर, कसैले आफ्नो पेसा सारांशमा थपेर, (जस्तै डाक्टरको डीआर, इन्जिनियरको ईआर), कसैले थोप्ला वा दशमलव हालेर, वा त्यतिकै । अनि त्यसको पछिल्तिर आफ्नो रोल नम्बर, लक्की नम्बर, खाता खोल्दाको साल (नेपालीमा वा अंग्रेजीमा) फुर्को जोडेर पासवर्ड बनाउने धेरै भेटियो ।

जेहोस् मानिसहरूको, संघ-संस्थाको पासवर्ड वा इमेल ठेगानाको अध्ययन विश्लेषण गरेकै भरमा तिनीहरूको साइकोलोजी बुझ्न सकिने रै छ । सानोतिनो ज्योतिषस्योतिष नै बन्न सकिने रै छ । कम्प्लेक्स टाइपको मान्छे वा संघ-संस्थाले पासवर्ड वा इमेल ठेगाना पनि कम्प्लेक्स नै राख्ने रै छ । गाई सोझो, दायाँ-बायाँ गर्न नचाहनेले भने सीधै, ढ्याक्कै आफ्नै नाम वा संस्थाको नाम अनि एक/दुईवटा अंक हालिवरि एट द रेट जिमेल डट कम, वा याहु डट कम वा हटमेल डट कम बनाउने रै छ । नो टेन्सन, खल्लास ।

नानाथरिको संघ-संस्थाका लागि, बैंकिङ सेवाका लागि, अनलाइनसँग सम्बन्धित कारोबार वा विषयका लागि पासवर्ड, ठेगाना बनाउने क्रममा तिरिमिरि नै हुने रै छ । के पासवर्ड बनाउने, के-के लेटर एवं अंक हालेर बनाउने, कहाँ केचाहिँ पासवर्ड बनाएँ वा बनाएको थिएँ भनेर सम्झिनकै टेन्सन हुने । फेरि बैंकिङजस्ता कतिपय निकाय छन्, एक/दुई महिना भयो कि 'चेन्ज योर पासवर्ड', 'अपडेट योर पासवर्ड' भनिराख्ने भन्या, हैरान हैरान हुने गरी । त्यसो त पासवर्ड बनाउनै महाभारत हुने बेला बेला-बेलामा पासवर्ड चेन्ज गरिराख्नुभनेर हत्तु पार्छ भन्या ।

अचेल इमेल ठेगाना हुनुभनेको पनि अनिवार्यझैं भइसक्यो । अझ मोर्डन हुन इमेल एड्रेस आदान-प्रदान गर्नु त स्टाटस जस्तै भइसकेको छ । समय कस्तो भइसक्यो भने रेस्टुराँ वा होटल पुगेर बिसाउन पाएको हुँदैन, कुनै गन्तव्य पुगेर राम्रोसँग सास लिन भ्याएको हुँदैन वाइफाइको पासवर्ड के हो भनेर









सोधिटोपल्छौं । पासवर्ड पाउनु त अक्सिजन पाउनु जत्तिकै हुंदो रै छ । त्यसो भएर कतिपय रेस्टुराँले 'नो वाइफाइ, वन्ली वाइफ एन्ड आई, ड सोसियलाइजेसन' लेख्न थालेको छ । कतिपय होटल रेस्टुराँमा खानपिन गर्न आएपछि मोबाइल नचलाइबसे १० प्रतिशत छुट दिनेसम्म व्यवस्था गर्न थालेको छ ।

अचेलका सबै ग्याजेट, स्मार्ट फोनमा सुरक्षाको दृष्टिले, गोपनीयताको दृष्टिले लक गरेर राख्न मिल्ने खालको छ । यसका लागि गाईबस्तुलाई जस्तै दाम्लाले बाँधिराख्नु जरूरत छैन । त्यस्तो लक गरेर राख्ने पासवर्डको प्याटर्नको दुनियाँ पनि रमाइलै हुने रै छ । कसैले आफ्नो नामको अघिल्लो लेटरअनुसार बनाएको छ, कसैले डमरूजस्तै, कसैले बक्सजस्तो, कसैले अंग्रेजी एम वा यु वा डब्ल्यूलाई ओल्टाइपल्टाइ बनाएको छ, 'जसो-जसो बाहुनबाजे उस्तै-उस्तै स्वाहा' भने जस्तै । यसमा पनि जड, झन्ड, कम्प्लिकेटेड मानिसहरूको मोबाइल लक अनलक प्याटर्न पनि जडसूत्रवादी नै हुने रै छ ।

यत्तिको लामो बेली विस्तार लगाएपछि पाठकको दिमागमा पनि 'ए हो नि' भन्ने लाग्यो होला, दिमागको बिर्को खुलेजस्तै भयो होला । कि कसो ? पासवर्ड, इमेल ठेगाना के-कस्तो बनाएको छ नि ?



# गजुरियल डटकमको प्रस्तुति



मनोज गजुरेल

## १. जलहरी विसं २०९९ सम्ममा तिलहरी भैसक्छ !

पशुपतिनाथलाई चढाइएको जलहरी निकट भविष्यमा तिलहरी हुने खतरा रहेको महान भविष्यवक्ता द जड्डे मौसुफले बताएका छन् ।

ओली सरकारले चढाएको जलहरी प्रचण्ड सरकारले जोख्दा आधा किलो कम भएको थियो । यही क्रममा जलहरीको तौल घट्दै गए आगामी सरकारको पालामा १ किलो कम हुनेछ ।

एउटा सरकारका पालामा आधा किलोको हिसाबले घट्दै जाने हो भने आगामी १५ वर्षमा जलहरी तिलहरी भैसक्ने उनको तर्क छ । '६/६ महिनामा सरकार फेरिने विगतको इतिहास हेर्दा यो सम्भावनालाई नकार्न सकिन्न' -जड्डे मौसुफले भने ।

उनका अनुसार जलहरीलाई तिलहरी बन्नबाट जोगाउने २ वटामात्र उपाय छन् । पहिलो, अब उप्रान्त जलहरी तौलको विषयमा तैं चुप मै चुप हुनुपर्‍यो । दोस्रो, सरकार परिवर्तनको शृत्लाको खड्गो काट्नु पर्‍यो ।

हृदयमा हरि नभएकाहरूले सरकार चलाइरहने हो भने जलहरीबाट तिलहरी, तिलहरीबाट शिवहरि र शिवहरिबाट कठैबरी हुने हाम्रो ठम्याइ छ ।

## २. ललिताका थैला निवासका मैला, के गर्नु भाटभटेनीले !

ललिताका थैला निवासका मैला
के गर्नु भाटभटेनीले !
मकै र मुला खाएको बेस
आनन्दी मनले ! !

# उल्टो सुल्टो

सदीक्षा थापा

नरक करन
ईलाम मलाई
माला लामा
निरा रानी
तारा राता
निमा मानि
धारा राधा
रूपा पारु
नामी मीना
निशा शानी

# मन्त्री किन नभन्ने !

सुशीला ताहामाटा

सरकारी गाडी - मूल्य रू एक करोड
सुरक्षाकर्मी - तलब मासिक रू ४२ हजार
गाडीमा तेल - मासिक रू १७ हजार
स्वकीय सचिव - मासिक रू ४२ हजार
घरभाडा - मासिक रू २० हजार
पत्रपत्रिका - मासिक रू ५ हजार
टेलिफोन - मासिक रू ५ हजार
घर, फर्निचर मर्मत - मासिक रू ७ हजार
मन्त्रीभत्ता - मासिक रू १ लाख

# पैसा

श्रीती श्रेष्ठ
ठिमी, भक्तपुर

पैसाको पानी
पैसाको भात

पैसा नै आदत
पैसा नै औकात

पैसा नै बेइज्जत
पैसा नै इज्जत

पैसा नै तागत
पैसा नै कागज

पैसा नै सुन
पैसा नै गुन

पैसा नै फलाम
पैसा नै मलाम

पैसा नै ओढ्ने
पैसा नै ओछ्याउने

पैसा नै सम्पत्ति
पैसा नै आपत्ति

पैसा भए सबैको साथ
पैसा नहुँदा आफ्नैको लात

पैसाबिना गाह्रो
मान्छेको जात

# थरको के भर !

नरबहादुर कार्की

जोशी - तर साह्रै अल्छी
पुरी - तर मन पर्ने रोटी
गिरी - तर उक्साहट
भारती - तर नेपाली
मगर - तर जहिल्यै तँ गर
लामिछाने - तर एकछाने
बस्नेत - तर घुमिरहने
थापा - तर थाहै नपाउने
भुजेल - तर घरमै बस्ने
सिरपाली - तर जस्ता छाने
पराजुली - तर ढलान छाने
पौडेल - तर पौडन नआउने
हमाल - तर सिम्पल
रिमाल - तर एकोहोरो
श्रेष्ठ - तर निकृष्ट
बुढाथोकी - तर युवा अल्छी
पुडासैनी - तर आधा मात्रै
अधिकारी - तर पछि फर्कने
कार्की - तर साइकल कि

# उमेशचन्द्र अधिकारी























































यसो बजार अनुगमन गरेर झारो टार्ने होइन त ...? चाडबाड आइसक्यो त.....




मैले नि सबै पार्टी सिद्धान्त छोडिदिए...चुनाउमा तपाईंको पार्टीबाट उठ्ने विचार गरें....




संधै काम चलाउ सरकार




सब नेता जेलमा अब ,अब जेलमा मन्त्रि क्वाटर बनाउने होलान नि...




बालुवाटार




प्रम




पत्रकारहरू पनि विक्रिमा छन् भन्ने सुन्दैछु...हाम्रो भाउ भन्दा बेसी मुल्य नराख्नुहोला...




चुनाउ खर्च धेरै गरियो , अब यो बोरा त भर्नै पर्यो नि....




बाँदर सम्मेलन










विकास






खै बालुवाटार तिर देख्दैथिएँ..
अयोग्यहरु कतातिर गए...?




मिटर ब्याज






ज्यानमारा मात्र निकाल्ने...पकेटमारा होइन...बुझ्नुभो...?
अध्यादेश





# यो घर कस्को !

प्रेम वली ढकलपुरे

यो घर कसको ? आलेको
ठाउँ-ठाउँमा छानो टालेको
त्यो घर कसको ? कालेको
सुनकै छानो हालेको ।
यो घर कसको ? बालेको
फुसको छानो हालेको

त्यो घर कसको ? झालेको
सुनकै बुट्टा हालेको ।।
काले र झाले नेता भो
आले र बाले जनता हो ।

यो बूढी कसकी ? कालेकी
सुनको ब्रा हालेकी
त्यो बूढी कसकी ? आलेकी
गुन्यौ र चोली टालेकी ।

त्यो छोरा कसको ? झालेको
महँगो बोर्डिङमा हालेको
त्यो भुरा कसको ? बालेको
सरकारी स्कुल थालेको ।

कुखरा चोर यहाँ नेता भो
जनताको हालत यस्तो भो
जनताको भाग्य आउला ?
के देशले नेता पाउला ?
हे भगवान् एउटा राम्रो नेता पठाइदेऊ
काले र झालेलाई नौडांडा कटाइ देऊ

# खै पुलिस !

कुखुरी कां
कमिसन खा
खै कमिसन ?
नेताजीले खायो
खै नेता ?
घूस खोज्न गयो
खै घूस ?

पुलिसलाई सोध
खै पुलिस ?
चाकडीमा गयो ?
खै चाकडी ?
झोलेलाई सोध
खै झोले ?
मन्त्री बन्न गयो
खै मन्त्री ?
भ्रष्टाचार गर्न गयो
खै भ्रष्टाचार ?
अख्तियारलाई सोध
खै अख्तियार ?
दुलाभित्र पस्यो
खैलो दुलो ?
पार्टिले कुचल्यो
खै पार्टी ?
विकास गर्न गयो
खै विकास ?
खोलाले बगायो
खै खोल्यो ?
नेताले बेच्यो ।



# फेसबुककी गर्ल फ्रेन्ड

काकाश्री धनुषधारी

फेसबुकमा एउटीको फेस देखेपछि
तीनलाई हेल्लो भन्न मन लाग्यो
बीस वर्षकी धपक्क बलेको मोरी
आजदेखि उसको ब्वाइफ्रेन्ड बन्न मन लाग्यो .
हेल्लो भनेर लेखेपछि
उसले पनि हाई भन्दै उत्तर लेखी
मुस्कानसहितको फोटो पठाई झलल देख्खी
लबचिह्न पठाउँदा मलाई किसको आयो
मनका लड्डुघ्यूसित छोरा कतिखायो खायो
दिनभर च्याट रातभर च्याट
भेट्ने तलतलले छोरो ऱ्याट ऱ्याट ।

एक दिन भेटघाटको तय भयो
मनमनै भने भगवान्को जय भयो
खुसीले दंग हुंदै भेट्न गाको
झन्नै म त बिहोस भाको
आफू मात्र पचीस भाको
उनी चालीसको पाको
म मूर्ति बनेको देखेपछि अन्टीले गाला चिमोट्दै भनिन्
म तिमीलाई बूढा बनाउने हो र ?
मैले त बेलन बनाउन खोज्या हो
तिमी मुर्रा भैंसी जस्तो देखेर मनैदेखि रोज्या हो
ल हिंड आज मेरो घरतिर वाल्ल परेर के सोच्या हो ?
आजभोलि यी अन्टीको मात्र हैन, धेरै अन्टीको बेलन भा छ
सरकारले जागिर नि दिन सक्दैन, आफ्नै स्वरोजगारी पा छु ।

# के काम !

सन्तोष भुजेल

घट्ट जाँदा रिसाउने
मलामी जाँदा बिसाउने
उकालीमा पाद्ने
भतेर खाँदा छाड्ने
असारमा छल्ने
दशैंमा भर्ने
संगै सुत्दा घुर्ने
अर्कालाई पिर्ने
छोरी कुटी बुहारी तर्साउने
मदिरा धोकी स्वास्नी कुट्ने
भ्रष्टाचारी सिंहदरबार हुल्ने

बिहेपछि केटी लिई छुम्ने
लगाएको गुन बिर्सने
खाएको नुन बिर्सने
दूधमा पानी मिसाउने
जन्त जाँदा केटी जिस्काउने
छोरालाई भिन्दै बस्न उक्साउने
घाम झुल्कन्जेल बुहारी सुत्ने
देउरानी-जेठानीको रिस गर्ने
श्रीमान्को काखमा भुल्ने
पानी नछेक्ने छाता
विश्वास नभएको नाता

# राजेश मानन्धर





अयोग्य लडाकुलाई दुईदुई लाख पाउनेरे! अब पास हुनु नै परेनछ बा!
?!
राजेशमानंधर




सदन देश निर्माणकालागि छलफल गर्ने ठाउँ हो कि भ्रष्टाचारीलाई जोगाउने स्थल हो ?
?!
राजेशमानंधर




तिमीहरू मात्र हवाइजहाज चढ्ने? हामी-चैं सधैं हेरेको हेरै गर्ने!!
?!
राजेशमानंधर




अरू काम भाँडमेजाओस्! कर्मचारी सरुवा फटाफट क्या!
?!
सरुवा फटाफट
राजेशमानंधर




सरकारले रासायनिक मलको मूल्य बढाएर विदेशी तरकारी नै खाऊ भन्न खोजेको जस्तो छ !
?!
राजेशमानंधर




गुगल चलाउन नजान्ने पूर्व मन्त्रीले त्यो संसदबाट पाएको एप्पल कम्प्युटरको के गरे होला?
फिलिम हेर्न लग्या होला नि!
?!
राजेशमानंधर




यातायात आन्दोलन भो तै मौकामा लोट्से मलबाट झ्याप पारेको नि!
?!
राजेशमानंधर




राष्ट्रपतिमा राष्ट्रिय सहमति भए पनि नभए पनि हामी जनतालाई चै के पाइन्छ ?
राजेशमानंधर




शिवरात्री मेला २०७९
मुर्दावाद !!




ली! नयाँ कम्प्युटर नाङ्गा बाबा!
शिवरात्री मेला-२०७६
राजेशमानंधर




३ महिनामा १८ सय किलो सुन भित्राएको रै छ भने पछि एक वर्षमा कति भित्रिने होला त ? नकुरा गरू बा !
?/
राजेशमानंधर




विदेशीकै आज्ञापालन गर्ने र जुठेपुरोमा हुर्केका व्यक्ति नै नेपालको राष्ट्रपति हुदैंछन् रे! अचम्म छ बा!
?!
राजेशमानंधर




सबकुरा गुमाउनु परेको झोकमा मान्छे बर्बराउँदैन कि क्या हो??
?!
राजेशमानंधर




काण्डै काण्डमा अलमल ! कहिले बनाउँला देश ???
?!
राजेशमानंधर




म पनि नक्कली शरणार्थी बनेर अमेरिका जानु पर्‍यो कति पैसा लाग्छ कमरेड ?
?!
राजेशमानंधर




नागरिकता विधेयक पास भएपछि भारतीय रासनकार्ड बाड्ने कुरो चैं के भो ता ?
राजेशमानंधर




आज भोली बजारमा ब्रेक सुको तोलाको कति पर्छ बूढा ?
राजेशमानंधर




अचम्म छ बा! ठूलै लडाइँ जितेर आएजस्तो! जेल बसेर आ'कोले पनि फूलमाला?
?!
राजेशमानंधर








खल्ती भएको लुगा लाउन नपाउने रे ! यात्रुलाई चित्त बुझाउन लंगौटी लाउने होला नि !
त्रिभुवन विमानस्थल
खल्ती भएको लुगा लाउन नपाउने
राजेशमानंधर


मान्दे, बारबा र सुन खाने पनि पारटी नेपालमा छन् र? हँसाउछ बा!
?!
राजेशमानंधर


हामी नेपालीको लागि ३६५ दिन नै अप्रिल फूल हो, तर नेताहरुको लागि हैन क्या !
?!
राजेशमानंधर


कतिपल्ट गाडीको भाडादर निर्धारण गर्ने हो कमरेड ?!
?!
पेट्रोल, डिजल मूल्य बढ्यो....
राजेशमानंधर


फाइदा सबै भारतलाई बेफाइदा जति नेपाललाई नकुरा गरौं!
?!
राजेशमानंधर


मेलम्चीको पानी र मुग्लीम नारायणघाट सडक, खुल्ने भन्दा बढी बन्द हुने!
भ्रष्टाचारीहरुको दुहुनो गाई केहो?


लौ! भैंसीसँग देश बेच्न पाइँदैन भन्द बा!
?!
संसदमा रमाले, शस्त्र र तारबारी
राजेशमानंधर


?!
बिचौलिया समाजवाद
?!
राजेशमानंधर


सुनको चुरा लाउने नेताहरुले काहाँ पारर फलामको हथकडी लाउँछ भन्या ?
?!
राजेशमानंधर


मान्दे, बारबा र सुन खाने पनि पारटी नेपालमा छन् र? हँसाउछ बा!
?!
राजेशमानंधर


हैन! मेरै खाता, मेरै पैसा निकाल्ने हो, फोन नम्बर लेख! चेक पछाडि दुईवटा साइन गर! मास्क खोल रे! अब के सब लुगा पनि खोलौं ?!
!?
बैंक पति साथी पनि
राजेशमानंधर


भारत भ्रमणमा जाँदै हुनुहुन्छ, 'कालापानी' नेपालमा पर्छ कि पर्दैन कुरो गर्नुस् है ?
?!
राजेशमानंधर


मलाई प्र.म. बनाउन धेरै चोटी दिल्ली जानु भयो!
पिरीतम बिना केही हुन बन्न सक्दैन!
राजेशमानंधर


जुंगा लडाई! नकुरा गरौं!
!
राजेशमानंधर


हनिमुन समय ता गठबन्धन बनाउने र भत्काउने मैं बित्यो क्या!
राजेशमानंधर


राजेशमानंधर


लौ! TIKTOK मा नाँच्ने पनि उपराष्ट्रपतिको उम्मेदवार ?
राजेशमानंधर


?!
सुन
सुन
बाढी
सुन
सुन
सुन
सुन
राजेशमानंधर

## राजेश मानन्धर





















# बहिनी देउरानी भएपछि

अम्बिका थापा मगर

बबा-मामुकी हामी दुईवटी छोरी
मेरो बिहे भएको दुई वर्षपछि
एउटै घरमा दिदी-बहिनी हामी
देउरानी-जेठानी हुंदा खेरिमा
कति भाग्यमानी भन्ठानेर
देवरलाई बहिनी मागी टोपलें
देवरबाबु र मेरा बाबा-मामु दुवै खुसी
म झनै खुसी, सुखै होला भन्ठानें
तर, अहिले आएर किन हो किन
दिदी-बहिनीको एउटै भएको,
मन पनि दुईवटा हुन पुगेको छ
बहिनी मसँग पनि बोल्दिनँ
माइत जाँदा एक वचन सोद्धिनँ
एक्लै-एक्लै नबोली जान्छे
मेरो कुरा माइतमा लाउँदि रैछे
लोग्ने, ससुरा फकाउनु फकाउँछे
नयाँ -नयाँ लुगा गहना हाल्छे
मलाईचाहिं उही पुरानैमा टार्न लाउँछे
बिहान-बेलुकी घरभित्रै काम गर्छे
मलाईचाहिं बाहिरको काम खटाउँछे
खाना खाएपछि जुठो चुल्हो भाँडा
चटक्कै मलाई नै छाडिदिन्छे
आफूले र देबरले खाएको मात्रै माझ्छे
सासू, ससुरा, म र मेरो लोग्नेले खाएको
जुठ्यौनु छुँदासम्म पनि छुदिन
मेरा लागि सोच्छु आफ्नी बहिनी
तर, अचेल बहिनी यस्तीसम्म भएकी छे





# अधुरो

सुरज 'महामन्त्री'

घाम अधुरो छायाँबिना
जीवन अधुरो मायाँबिना
लिक अधुरो रेलबिना
जित अधुरो खेलबिना
चामल अधुरो भूसबिना
कर्मचारी अधुरो घूसबिना
फूल अधुरो बास्नाबिना
जुन अधुरो ताराबिना
रूख अधुरो जमिनबिना
वर अधुरो पीपलबिना
संसार अधुरो साथीबिना
घर अधुरो छानाबिना
खोला अधुरो पानीबिना
व्यापारी अधुरो कमिसनबिना
नेता अधुरो डोनेसनबिना
मायाँ अधुरो अँगालोबिना
भाषण अधुरो मन्तव्यबिना
हिंडाइ अधुरो गन्तव्यबिना
सिरक अधुरो खोलबिना
नास्ता अधुरो झोलबिना
नेता अधुरो तालीबिना
भिनाजु अधुरो सालीबिना

MARUTI
CEMENT
Building Dreams

नेपालको नं. 1

# सबैलाई थाहा होला नहोला...

राष्ट्रिय गौरवका ठूला ठूला संरचनाहरु निर्माण गर्न होस् या पुराना धरोहरहरु मर्मत-सम्भार गर्न, हाम्रो पनि उतिकै योगदान रहेको छ र रहीरहने छ ।







**Corporate Office :** Dharan Road, Biratnagar
021-590204, 590205, 590206 info@maruticements.com

**Kathmandu Office:** Tripureshwor, Kathmandu, Nepal
977-1-5357566, 5367377 info.ktm@maruticements.com

www.maruticements.com maruticements

# दाजुभाउजूको देशमा

लक्ष्मण गाम्नागे

हेर्नू,
एउटा यस्तो उदेक हेर्नू
राज्य नै माफिया भएको देश हेर्नू
सरकार नै तस्कर भएको एउटा देश हेर्नू
नपत्याए ललिता निवासको केस हेर्नू
शरणार्थी काण्ड मच्चाउनेहरूको फेस हेर्नू
माफियाहरूलाई माफी दिलाउन
राष्ट्रिय दाजुभाउजूहरूको रेस हेर्नू ।

हेर्नू,
सरकारले जनतालाई डीभी पारेको हेर्नू
आफ्नै नागरिकलाई शरणार्थीमा फारेको हेर्नू
नगद पाए नगदमाथि, जिन्सी पाए जिन्सीमाथि
माननीय सम्माननीयहरूको ताण्डव नृत्य हेर्नू
नेता, प्रशासक र दलालहरूको कृत्य हेर्नू
राष्ट्रिय छोरी-ज्वाइँ, राष्ट्रिय छोरा-बुहारी
राष्ट्रिय बा-आमा र राष्ट्रिय सम्धी-सम्धिनीमाथिको
राष्ट्रिय सम्मान हेर्नू
भूमाफियाहरूको सान हेर्नू
अख्तियारको काम हेर्नू
ह्वेलहरूलाई हलुवा खुवाएर
माछाहरूलाई ढोक्सामा हालेको हेर्नू
हेर्दै जानु, ठूला माछाहरूलाई खोलातिरै फर्काएर
भुरा माछा फ्राई गरेको हेर्नू
सरकारले भ्रष्टाचार निर्मूल गर्न ट्राइ गरेको हेर्नू ।

खोज्नू
जेलजान लस्कर लागेका
सरकारी भीभीआईपीहरूको अनुहारमा सरकार खोज्नू
हात हल्लाउँदै-हल्लाउँदै झ्यालखानातिर गइरहेका
छाती फुलाउँदै-फुलाउँदै झ्यालखानाबाट आइरहेका
सम्माननीय भ्रष्ट,
माननीय माफिया र
सेलिब्रिटी बलात्कारीको अनुहारमा लोकतन्त्र खोज्नू
तिनीहरूले लगाएको अबिरमा, खादाले पुरिएको खप्परमा
देशको भाग्य र भविष्य खोज्नू
खोज्नू,
तिनीहरूको स्वागतमा तँछाडमछाड गरिरहेको भक्तजनहरूको भीडमा
लज्जा खोज्नू, सभ्यता खोज्नू,
विवेक, नैतिकता र मानवता खोज्नू ।

हेर्नू,
हातमा हतियार हुनेहरूले अन्धाधुन्ध हतियार चलाएको हेर्नू
नियम, कानुन र संविधानलाई सूलीमा चढाएको हेर्नू
नेता र तस्कर बीचको मेलमिलाप हेर्नू
न्यायमूर्ति र दलालबीचको प्रेमालाप हेर्नू
मन्त्राणीको ओछ्यानमा बसेर माफियाले
नोटका बिटा भाग लगाएको हेर्नू
सुरक्षामन्त्रीले नै अपराधीलाई भगाएको हेर्नू ।

यो पनि हेर्नू,
गुरूको अनुहारमा कालो मोसो दल्ने
शिष्यहरूको कुलङ्घार अनुहार हेर्नू
चिर्पटले गुरूको टाउको चिरेको हेर्नू
टाउको चिरेर शिष्य पार्टी कार्यालय छिरेको हेर्नू ।

हेर्नू,
पिताम्बरमा लपेटिएका शीर्षस्थ क्रान्तिकारीहरू
धर्मको 'अफिम'मा लठ्ठिएर पलेँटी कसेको हेर्नू,
गलामा रूद्राक्ष, निधारमा चन्दन र शरीरमा भस्म घसेको हेर्नू
नास्तिकताका विद्यावारिधि पण्डितहरूको
मूर्ति ढोग्न लम्पसार पर्दा धोती खुस्किएको हेर्नू
पशुपति मन्दिरको ढोकामा भक्तिपूर्वक घोप्टिएको हेर्नू
द्वन्द्वात्मक भौतिकवाद शिवलिङ्गमा चेप्टिएको हेर्नू

हेर्नू,
क्रान्तिकारीहरूले ओडेको बाघको छाला हेर्नू
हनुमानहरूको मुखमा लागेको ताला हेर्नू ।





हेर्नू,
मन्दिरमा सुनको जलारी चढाएको हेर्नु
चढाएको सुन हेर्दाहेर्दै हराएको हेर्नु
चोरलाई चोर भनेर हप्काउँदा चोरहरु हाँसेको हेर्नू
स्वर्गमा पनि सत्तामै बस्न पाउँ भन्दै
भगवान्कै छेउमा नामावली टाँसेको हेर्नू ।

हेर्नू, हेर्दै जानू,
नयाँ-नयाँ जोगीहरूले ओडेका नयाँ-नयाँ कम्बल हेर्नू
जोगीहरूका त्रिशूल हेर्नू, सुनका कमण्डलु हेर्नू
अनुहारमा दलेको बाक्लो खरानी हेर्नू
कम्बलभित्र लुकेर घिउ खाएका चिल्ला-चिल्ला ओठ हेर्नू
कुन रूखबाट टिपेर ल्याउँछन् मोठकामोठ नोट हेर्नू
विकास र सुशासनका मुसलधारे मन्तव्य हेर्नू
कसीमा धसी-धसी तिनीहरूको गन्तव्य हेर्नू ।

नहेर्नू, हेर्दै नहेर्नू,
जानाजान तातो घाम खान मरूभूमितिर जान लागेका
लाचार युवाहरूको एअरपोर्टको जाम नहेर्नू
उजाड वृद्धाश्रम बन्दै गएको विकराल गाम नहेर्नू
नहेर्नू, काठको बाकस नहेर्नू, परिवारको सकस नहेर्नू
हेर्दै नहेर्नू
आँखा फुटेका,
खुट्टा काटेका,
कोमामा गएका,
मान्छे हुन अयोग्य भएका
पूर्वसहकर्मीहरूतिर नहेर्नू
बेपत्ता छोराछोरीका बाउ-आमाहरूका रून्चे अनुहार नहेर्नू
नागरिकता नपाएर रोइरहेका नागरिकतिर नहेर्नू
धाँजा फाटेका खेत, बाँभ्रो पल्टिएका बारी नहेर्नू
रूँदै गरेका किसान, मिटर ब्याजले मरेका गाउँलेहरूतिर पनि नहेर्नू

कविजी,
हेर्नू,
एउटा यस्तो देश हेर्नू
राज्य नै माफिया भएको देश हेर्नू
सरकार नै तस्कर भएको एउटा देश हेर्नू ।
तर, झुक्किएर पनि
रछ्यान उधिनेर मुर्मुट्टाहरूको मनको शान्ति भंग नगर्नू
लासहरूमा सास पस्ला भन्ने आस नगर्नू
बरू,
साउनमा आफ्नै आँखा आफैं फोर्नू
र सधैं हरियो देख्नु
र हरिया-हरिया कविता लेख्नू ।

र अन्तमा यो पनि हेर्नू,
निरोहरूको निधारमा हर्कहरूले हम्मर हान्न थालेको हेर्नू
राउन्नेहरूको पुच्छरमा बालेनहरूले आगो बाल्न थालेको हेर्नू ॥

# देख्दा लाग्छ उदेक



**ललिता 'दोषी'**
बुद्धनगर काठमाडौं

अनौठो छ हर्नुहोस् हजुर मेरो घरको चाला
यस्तो हरिलट्ठकसँग क्यारी जीवनजाला ?
घरमा अन्नगेडा छैन ल्याउँछन् पुस्तक ठेली
भोको पेटमा रमाउँछन् त्यही पुस्तक हेरी ।

बिहेपछि आँसु पिएँ सधैं पाइनँ है खुसी
भुसुनाले लात्ती हान्दा हेर्छु टोलाई बसी
अहो ! कस्तो-कस्तो नशा छक्कै परें म त
खान, पिउनु वास्तै छैन लेख्नुमै छ लत ।

एउटा खोस्टा ल्याएका थे त्यही हेरी बस्छन्
ठूलै मान्छे बन्छु भन्दै सधैं घुंडा धस्छन्
व्यापारीलाई दिनुभन्दा कवि छाने बाउले
घरी-घरी दागार्धछ त्यही कान्छा साहूले ।

दुई/चार अक्षर पढ्या नेता हिंड्छन् कार चढी
पीएचडी गरें भन्छन् छैन एउटा घडी
नेताज्यूका छोराछोरी अमेरिका, जापान
हाम्रा छोराछोरी भोक्कै उनकै सानमान ।

कविताले खानलाउन के-के दियो भन ?
तिम्रो गन्थनमन्थन छाप्दा लाग्यो धेरै ऋण
कहिले फिर्ला तिम्रो बुद्धि कहिले उठ्ने माथि ?
लागेन खै आँङमा घाम सधैं देख्छु राति ।

आदर्शले नभरिने रैछ बूढा पेट
तिम्रो हठी स्वभाव देख्दा लाग्छ है उदेक
छैन खुसी मनभित्र आगो बलिरहन्छ
जीवन भयो शून्य बगर दुनियाँले भन्छ ।

# कर्तव्य नछोड

**नवीनबाबु कार्की**

घर चिन्न घर जोड
गाउँ चिन्न गाउँ छोड
शहर चिन्न शहर छोड
देश चिन्न देश छोड
आमा चिन्न सुख छोड
बाबु चिन्न घरबार जोड
दाइ चिन्न अंश छोड
भाइ चिन्न सम्पत्ति जोड
बहिनी चिन्न सम्बन्ध तोड
दिदी चिन्न आमा छोड
भाउजू चिन्न जागिर छोड
ससुराली चिन्न श्रीमती छोड
साथी चिन्न लेनदेन जोड
समाज चिन्न साथीभाइ तोड
जिन्दगी चिन्न पढाइ नछोड
समय चिन्न कर्तव्य नछोड

# महादेव-महानायक संवाद



कपिल काफ्ले

ललितपुर जिल्लाको झरुवाराशी निवासी सन्तानेश्वर महादेव, यसअघि छोटकरीमा 'सम' भनिने र काठमाडौँको लैनचौर निवासी राजेश हमाल, यसअघि 'राह' भनिने दुई फलामधारी व्यक्तित्वबीच गाईजात्राको पूर्वसन्ध्यामा संवाद भएको खुलासा गर्दै यो संक्षिप्त टिपोट सबैको जानकारीका लागि सार्वजनिक गरिन्छ :

समः कपाल त तिमी पनि लामै पाल्छौ, मेरोजस्तै । तर लट्टा पर्दैन, के लगाउँछौ हँ ?

राहः खासै केही लगाउँदिन, फुर्सद छ, कोरिरहन्छु । त्यसैले, लट्टा पर्नै पाउँदैन, अह..अह..अह (हाँसो) ।

समः तिमीले ढाँट्यौ, तिमीसँग फुर्सद छैन ।

राहः साठी वर्ष नाघियो, बूढो भइयो । अब फिल्ममा हिरो बनाउँदैनन् । चरित्र अभिनेता बनेर खेल्न आफू अभिनयका कारण चर्चित भएको कलाकार परिएन । शरीर हेरेर कसैले नायक-नायिकाको बाबु बनाउँदैन, अह..अह..अह (हाँसो) ।

समः तैपनि म मान्दिनँ, तिमीलाई फुर्सदै छैन । फुर्सद भएको भए मधु भट्टराईसँग समय बिताउँदैनथ्यौ ! उनीसँग समय बिताएको भए तिमीले मलाई यसरी संवादमै बोलाउन बाध्य बनाउने थिएनौँ !

राहः हजुरलाई मैले बाध्य पारेँ ! मैले कुरा बुझिन महादेव सर !

समः म सन्तानेश्वर महादेव, तिमी र तिम्री श्रीमती मधु मकहाँ नआए पनि हजारौं तिम्रा प्रशंसक मकहाँ आउँछन् र तिमीलाई सन्तान दिलाइदिनुपर्‍यो भनेर बिलौना गर्छन् । तर, म तथास्तु भन्न सक्तिनँ ! कम अप्ठ्यारोमा पारेका छौ तिमीले मलाई !

राहः सन्तान त मलाई चाहिएकै हो महादेव सर, मधुलाई पनि एकदमै चाहिएको छ । कथाले मागेपछि चलचित्रमा कस्तो-कस्तो गाह्रो कुरा त पाइन्छ । तर, कथाले माग्दा-माग्दा थाकिसक्यो, तर सन्तान भएन, तथास्तु भनिदिनु न त प्रभु !

समः तथास्तु भनिदिएर मात्र भो ! महादेवको वचन खेर जान दिनुहुन्छ !

राहः महादेव सर त सर्वशक्तिमान, हजुरले गर्न नसक्ने के छ !

समः तिमी कस्तो बुद्धु छौ, एमए पढेको मान्छे । अंग्रेजी, नेपाली, हिन्दी करिब एक दर्जन भाषामा बोल्न सक्छौ । तर पनि मेरो बाध्यता तिमी बुझ्न सक्तैनौ !

राहः महादेव त देवाधिदेव, कानुनको पनि कानुन संविधानजस्तो । हजुरले बोलेपछि त सक्किगो नि !

समः सबै काम मुखले बोलेर मात्र हुन्छ ! आफै गर्नुपर्छ क्या बुद्धु ! मैले तिम्रो सन्तान होस् भनेर वरदान दिए पनि तिमले मधुसँग समय त बिताउनुपर्‍यो नि !

राहः महादेव सर, योचाहिँ आपत्तिजनक कुरा भो है ! म मधुसँग समय नबिताएर अरूसँग गएको छु र ! मैले सार्वजनिकरूपमै प्रयास जारी छ भनेकै छु ।

समः हेर राजेश, तिमी केटीलाई महत्व नै दिंदैनौं । किताब पढेर बाबु हुन सकिन्न क्या !

राहः मैले कुरा बुझिनँ महादेव सर !

समः तिम्रो पुरानो साथी करिश्मा मानन्धरले सार्वजनिक गरिसकिन् नेसनल टेलिभिजनमा आएर । पत्रकारले उनलाई तपाईं र राजेशको विवाह भैदिए हुन्थ्यो भन्ने धेरै थिए कुनै बेला, भैदिएको भए राम्रो हुन्थ्यो नि हैन भनेर पत्रकारले सोध्यो । करिश्माले भनिन्- हुँदैनथ्यो । यसो एकलाइन कुरा गर्‍यो, सुटिङको डायलग बोल्यो, कुनामा गयो किताब पल्टाइहाल्यो, केटीका लागि समय नै छैन राजेशजीसँग । त्यस्तो व्यक्तिसँग कसरी जीवन चल्छ !

राहः हेर्नुस् महादेव सर, हजुरले श्रीमती सतीदेवीको मृत्युपछि उहाँको शरीर काँधमा हालेर संसार घुम्नुभयो, सतीको शरीर कुहेर चन्द्रागिरिमा निधार, पशुपतिको किनारमा गुह्य, भारतको गुहाटीमा योनी आदि पतन भएको पनि चाल पाउनुभएन । तर, म त्यस्तो खालको प्रेममा चाहिं विश्वास गर्दिनँ । मलाई लाग्छ, हजुरले त्यो काम भाङ-धतुरोको सुरमा गर्नुभएको हो ! म त्यस्तो केही सेवन पनि गर्दिनँ ! सचेत दिमागले प्रेम गर्छु, सम्बन्ध राख्छु ।

समः केटीलाई मतलब दिंदैनौ भन्ने त पचास वर्षको उमेरमा विवाह गरेकै कारणले बुझिन्छ । तर, विवाह गरेपछि त काम पनि गर न यार !

राहः भनें त, प्रयास जारी छ ! संगै सुतेकै छु । विवाह गरेपछि किताबै पढ्न नहुने, सुतेकोसुत्यै गर्नुपर्ने त होइन होला !

समः सुतेकोसुत्यै गर्नुपर्दैन । तर, परिवार नियोजनको साधन प्रयोग गरेर पनि बच्चा पाउने गाउँले दाइजस्तो पनि हुनुभएन नि !

राहः महादेव सरको कुरा बुझ्नै गाह्रो । बुढेसकालमा विवाह गरेर पनि किन परिवार नियोजनको साधन प्रयोग गर्नुपर्‍यो मलाई । त्यही पनि बच्चा भैदिए हुन्थ्यो भनेर धूपबत्ती गरिरहेका बेलामा । बरू त्यो गाउँले







दाइले चाहिं के गरेछ हँ ?

समः के गर्नु नि, परिवार नियोजन केन्द्रका मान्छे गाउँ गएर अस्थायी साधन यसरी लगाउने भनेर हातको बुढी औंलामा लगाएर देखाएछन्, यसरी लगाउनुस् अनि श्रीमतीसँग सुत्नुस् भनेछन् । सोझा गाउँले दाइ साँझमै औंलामा अस्थायी साधन लगाएर सुत्दा रहेछन्, राति अनेक पटक श्रीमतीसँग सम्पर्क पनि गर्दारहेछन्, तर बुढी औंलाको साधन नखसोस् भनेर हातचाहिं आकाशतिर उचालिरहँदा रहेछन् । यति कडा अनुशासन कायम गरेपछि त श्रीमती गर्भवती नहुनुपर्ने हो भनेको त ! उनी पछि परिवार नियोजन केन्द्रकै अफिसमा आएछन् नि झगडा गर्न ! तिमीहरूले गरेर मेरी श्रीमती गर्भवती भई, अब गर्भको बच्चा तिमीहरूले नै जिम्मा लिनुपर्छ भन्दै थिए रे !

राहः अनि यो कथाभन्दा महादेव सर किन मुसुमुसु नि ! हजुर महादेव म महानायक ! फरक नै के छ र, यसरी होच्याएर बोल्नुपर्छ ! मेरो हात त फलामकै हो नि ! हजुरको हातमा फलामको त्रिशूल छ, मेरो हातै फलाम छ । दुई 'महा'बीच टक्कर भयो भने पछि मलाई दोष नदिनुस् नि !

समः नरिसाऊ न राजेश ! तिमी मधुजीसँग सुत्नासाथ भुसुक्क निदाउने गर्छौ कि, अरूले सोद्धा श्रीमतीसँगै सुतिरहेको छु, प्रयास जारी छ भन्छौ तर सुतेर र चपक्क अंकमाल गरेर मात्र चाहिं प्रयास जारी भएको मानिन्न नि !

राहः मेरो व्यक्तिगत कुरामा दुनियाले चासो राखे, महानायक भनेर माया गरे, फ्यान भनेका भगवान् हुन् भनेर मैले सहें । तर, महादेव सर त मेरो फ्यान पनि होइन, आजसम्म मेरो एउटा फिल्म हेर्न आएको थाहा छैन । हजुरले त मेरो बारेमा चासो राख्न पनि मिल्दैन । मेरो गोपनीयताको अधिकार हनन गरिरहनुभएको छ हजुरले !

समः नरिसाउन प्लिज ! मित्रका लागि यो हात सलाम हो भने दुश्मनका लागि यो हात फलाम हो भन्ने तिम्रो डायलग मैले बिर्सेको छैन नि ! तर, हात चिसो फलाम बनाए पनि सबै शरीर चिसो बनाउनु चाहिं भएन भनेको नि ! 'युगदेखि युगसम्म' बाट शुरु भएको तिम्रो यात्रा एक असल सन्तानसम्म पुगोस्, मेरो चाहना यत्ति त हो ! कमन राजेश, बी एक्टिभ !

राहः यो दुनिया त एकोहोरो लाग्यो-लाग्यो, सन्तानेश्वर महादेवकै मन्दिरमा आएर मेरा लागि सन्तान मागिदिने फ्यानलाई त मेरो सलाम नै छ, तर देवाधिदेव महादेवलाई पनि मेरै चिन्ता !

समः तर, तिमी भन्छौ भने म आजैबाट, गाईजात्रा असीका उपलक्ष्यमा तिम्राबारे चिन्ता गर्न छोडिदिन्छु । किन भन न ?

राहः किन नि अब, बच्चा पाइ नै हाले पनि नेपाली नेल्सन मण्डेला भनिने नेता मोहनचन्द्र अधिकारी पारा हुने भइहाल्यो ! बाबुछोरा कतै हिंड्यो, मान्छेले यो तपाईंको नाति हो भनेर सोधिहाल्छन् ! कतिले हजुरबालाई नातिले कस्तो पछ्याएको पनि भन्लान् !

(सम-राह दुवै एकैसाथ हाँसे- अह, अह, अह, अह, अह....! दुवैको नाम अगाडि 'महा' बाट शुरु भएको विशेषणका कारणले हो कि हाँसो एकैखालको सुनियो- अह, अह, अह, अह !)



## सानुराज डंगोल

गाईजात्रा २०८०
















# शहरको सकस

सुदर्शन अधिकारी

आज हरेक मनुवाको चाहना भनेको सहरमा बस्ने भएको छ । शहरमा बस्न पाए जस्तोसुकै समस्याको पनि सामना गर्न तयार हुने रहेछन् । शहर र स्वार्थ पर्याय भएको थाहा पाएर पनि गाँउको हनुवा गोरूझैं हानिएर सहरमा नै आएका छन् । एउटा सानो खाट राख्न पुग्ने र त्यत्ति नै स्थान खाली रहेको एउटा कोठाको भाडा तिर्न कम्तीमा पनि पाँचवटा ध्रुर्वे हात्तीको लस्कर लगाउनुपर्छ । त्यसभित्र चार जनाको परिवार रहन विवश छन् । पकाउने, खाने भाँडा राख्नेलगायतका सबै कार्य त्यही कोठामा नै गर्नुपर्छ । सविन नामको सन्काह मान्छेको शहर आउनुको खास कारण भने छोरा छोरी पढाउनु हो । सविन सामान्य सग्ला अक्षर पढ्न सक्ने र सामान्य हिसाब गर्न सक्ने मात्रका थिए ।

उसको चाहना सन्तानलाई शिक्षा दिई जागिरे मान्छे बनाउनु रहेको छ । विचरा सविन पर्वतको पाखो बारीमा हलो फालेर शहर पसेकाले शहरमा काम गर्न पनि नपाइने हो कि भनेर चिन्तामा रहेको थियो । तर, बलको काम नपाउने कुरै भएन । उसले पसलको सामान बोक्न थाल्यो । बिहान ७ बजेदेखि बेलुका ७ भन्दा पनि पछिसम्म काम गर्थ्यो । त्यसरी काम गर्दा उसले पाउने ज्याला भनेको जम्मा ५ सय मात्र थियो । त्यसले छोरा सनम र छोरी सिम्रनलाई पढाउने फिस मात्र नभई घर भाडा तिर्ने, खाने सामलको जोहो गर्ने सबै व्यवस्था मिलाउनुपर्ने थियो ।

अझ यसै रकममा चिया, चुरोट, खाजा पानीको पनि व्यवस्था नगरी धरै थिएन । शहरको सामान्य बोर्डिङको शुल्कका लागि सनम र सिम्रनका लागि मात्र पाँचवटा हात्तीको लस्कर बुझाउन कम्ता मन दुख्दैनथ्यो । तर, उसले उनीहरूको उज्ज्वल भविष्यको मीठो सपना देखेको थियो । त्यसैले सविनले पढाइमा खर्च गर्न विलम्ब भने गर्दैन थियो । महिनाको अन्तमा जसरी भए पनि उसले शुल्क तिरिदिन्थ्यो । उसकी पोथी पवित्रा भने पाखा पखेरोमा घाँस, दाउरा र पानी पँधेरो गरेर आएकी सुदी शहरमा आएपछि तीनछक परिन् । किनभने शहरमा त ओल्लो घर र पल्लोका बीचमा बोलचालसमेत नहुने त्यो देखेर उदेक मान्दै झल्झली गाँउघर सम्झन्थी पवित्रा ।

जाडोमा असाध्यै जाडो र गर्मीमा पनि अत्यन्तै गर्मी अत्यासलाग्दो मौसम जे-जस्तो भए पनि सहेर बस्नुको विकल्प नभएकाले पवित्रा मनमा अनेक पीडा सहेर सहरमा रम्न विवश भएकी थिई । उसलाई पनि तिनै छोराछोरीको भविष्यले तानेको थियो । शहरमा त ऐंचोपैंचो सरसापटी केही पनि नपाइने र नहुने रैछ । गाँउमा पवित्राले सबै काममा छरछिमेकको साथ पाएकी थिइन् । शहरको शैली देखेर भित्रभित्र भत्भत्तिइने गर्थी । तरकारी पनि बाँडेर खाने, दूध, मोही, छिमेकमा दिने चलन थियो । चामलसमेत पैंचो दिने र लिने त्यो पहिलेको दिनहरू कम्ता याद आउँदैन उसलाई । शहरमा त न छिमेकी, न सरसापटी बडो अनौठो संस्कृति रहेछ भन्दै कहिले त अचम्म पनि मान्छिन् ।

यता छोरा र छोरीले अंग्रेजी बोल्न थालेपछि सबै पीर व्यथा हन्डर ठक्कर भुल्न थाले सविन र पवित्रा जोही-पोइले । छोरा सनम पनि अब आमा भन्न छाडेर मम्मी भन्न थाल्यो । बा नभनेर ड्याडी भनेर बोलाउन थाल्यो । छोरी सिम्रन पनि भात माग्दा राइस भन्न थाली भने पानी माग्दा पनि वाटर पो भन्छे त । छोराछोरीले यसरी एक वर्ष पनि नबित्दै अंग्रेजी बोलेको देख्दा र सुन्दा उनीहरू हर्षित भएका छन् । यता सविनको जीवन यात्रामा पसलमा सामान मात्र बोकेर शहरमा टिक्न हम्मे-हम्मे पर्ने भएकाले श्रीमती पवित्रा पनि केही काममा लागे सजिलो हुने सल्लाह गर्न थाल्यो । तर, काम पाउन पनि कठिन, फेरि ती छोराछोरी स्कुलमा लिन र पुऱ्याउन पनि समयमा नै आउनुपर्ने भएकाले खाली समयमा अरूको घरमा भाँडा माझ्ने काम गर्न थालिन् । यसबाट उनीहरूलाई निकै राहत मिल्यो ।

यसरी एकमात्र लक्ष्य भनेको शिक्षा आर्जनमा छोराछोरी अब्बल बनाउने रहेका सविन र पवित्रा दुवै ज्यादा आशावादी रहेका छन् । त्यसका लागि शहरका अनेकौं समस्याको सामना गरिरहेका छन् । शहरको सकस भन्दा आज सविनले सन्तानको भविष्य र शिक्षाको महत्वलाई बुझेकाले उसको सबैले खुलेर प्रशंसा गरेको पनि सुनिन्छ । शहर र स्वार्थ एक-अर्काको पर्याय बनेको छ । सुन्दा पनि उदेक लाग्छ । एउटै घरमा एकातिर मान्छेको मृत्यु भइरहेको छ अर्को कोठाको मान्छे भने धूमधामकासाथ विवाहको कार्यक्रम गरिरहेको हुन्छ । शहरमा न त सरसापटी न त ऐंचो-पैंचो नै हुने गर्छ । स्वार्थ र आफ्नो मात्र हितको काम गर्न आतुर रहन्छ । एकलकाटे स्वभाव र जसरी भए पनि आफ्नो नै लाभ हुने काम र कुरामा मात्र व्यस्त रहन्छन् । गाँउमा त कारीमा फलेका तरकारी पनि बाँडेर मात्र खाने गरिन्छ । दही, दूध, मोही जस्ता पदार्थ छिमेकमा दिएर मात्र खाने प्रचलन रहेको छ । त्यसै गरी, मीठो-मसिनो पाक्दा पनि बाँडेर मात्र खाने चलन रहेको हुन्छ ।

छिमेकी बिरामी भएमा पनि अस्पताल लान होस् या रेखदेख गर्न नैकिन नहोस् सदा सक्रय रूपमा कार्यमा लाग्ने विशेष परिपाटी रहेको हुन्छ । यस्तो सहिष्णुता गाँउमा मात्र देख्न सकिन्छ । शहरमा मात्र पाइने अन्य धेरै विशेषताहरू पनि रहेका छन् । कोलाहल, भीड, हत्या, हिंसा, लुटपाट, बलत्कार जस्ता अमानवीय कार्य सामान्य हुने गर्छ । आपसमा बोल्ने र आलखवर सोध्ने समेत समय हुँदैन । हतारको जीवन त्यसमा पनि दौडाह टोलीझैं अत्यन्तै व्यस्त जीवन शहरमा हुन्छ । गाँउमा त हालचाल, सञ्चो-विसन्चो सबै सोधेर असाध्यै मैत्रीपूर्ण वातावरणमा जीवनयापन गरिरहेका हुन्छन् । त्यो मिलन अनि सौहार्दता देखेर जो-कोही पनि अनौठो मान्ने गर्छन् ।

शहरमा मानवताको खडेरी परेको हुन्छ । शिक्षा, स्वास्थ्य, महँगी, भ्रष्टाचार, ठगी, कोलाहल, लुटपाट जे-जस्ता मानवविरोधी कामहरू भए पनि जेनतेन प्राणपखेरू धान्नैपर्ने बाध्यता रहेको छ । सामान्यतया एकमुठा रायोको सागलाई पनि १ सय वा एउटा गैंडा चडाउनुपर्ने बाध्यता रहेको यस स्वार्थी शहरमा तैपनि मौरीझैं झुम्मिएका छन् । शहरमा मै खाउँ मैं लाउँ को संस्कृति मौलाएको छ । जे-जस्तो शहरको कहानी भए पनि त्यसलाई स्वीकार गरेर हामी मानव सन्ततीको भविष्यलाई सुन्दर बनाउन लागि परेका छौं । यी सबै कारणले गर्दा हामी सवैले भन्नै पर्छ- जय शहर जय विकास अनि जय स्वार्थपूर्ण समाज ।







# जुँगे बाको लठ्यौरोलाई कन्या चाहियो

होम सुवेदी



मेरो छिमेकी जुँगेबाको जेठो पुत्रको परिवारलाई चिट्ठा परेका कारणले सात वर्ष वर्षअघि नै उता अमेरिकातिरै गएको थियो । सौभाग्य के भयो भने उसले आफ्नो अपांग र अशक्तभाइलाई समेत चिट्ठामा पारेर उतै लगिदियो । उता के-कस्तो धन्दा गर्छ उसैले जानोस् । तर, उसले आफ्ना पिता जुँगेबालाई भर्मन गर्न बोलाएको यो तेस्रो पालि हो । तीन वर्षभित्रैमा आफैं खर्च हालिदिएर पहिलोपटक बोलाएको थियो । युवा उता गएकोमा यताका बूढापाकाहरूलाई विदेश घुम्ने मौका पनि परेको छ । यो फाइदाकै कुरा भएको छ । हाम्रा जुँगेबाको कान्छो पुत्र यहाँ छँदा अलिक अशक्त जस्तो थियो । यहाँ उसलाई लक्पके भन्थे, शारीरिक रूपमा ऊ अलिक बेग्लै किसिमको थियो । बेला-बेला झन्काहा गाईले जसरी मुन्टो प्याकपऱ्याक बटार्थ्यो, मुख पनि किचिक्क किचिक्क पार्थ्यो । नयाँ मान्छेले उसलाई यस अवस्थामा देख्दा सद्दे मान्दैनथे । बालबालिका भने तर्सन्थे । विचराको शारीरिक संरचना नै त्यस्तै थियो । डाक्टरले पार्किन्सन हो कि के रोग भएको भन्थे । अरू सबै थोक छोडेर उसको मुख्य कुरा स्मरण शक्ति भने पाएको थियो । बूढाले यसै छोरालाई बिहे गरिदिन यसै प्रकृतिकी भए पनि केटी धुइँपत्ताल गरेर यतै छँदा खोजेका हुन् तर कसैले दिन मानेन । उता जानुअघि नै उनको यो पुत्र पैंतीसका हाराहारीमा पुगिसकेको थियो । यही छोरो उसको दाजुको चिट्ठामा उता गएको थियो । आज ता त्यसैले जुँगेबालाई अमेरिका डुलायो अरे । उनी त्यसै भन्छन् । डुलायो होला ।

यो पटकसमेत गरी उनी तीनपटक भयो उता पुगेर आएको । बूढा अलिक पढेलेखेका भएनन् र मात्र नत्र कतिवटा यात्राविवरण लेखेर विमोचन गराइसक्ने थिए । 'उता उकिल कप्तानबाले पैसाको तुजुकमा आफ्नो कायाकैरन लेखाए भने तिमी के हेरिहेका छौ बा ? एउटा लेखकलाई अलिकति चारो हालिदेऊ र लेखाऊ न आफ्नो पनि कायाकैरन ?' मैले भनेपछि उनी यतातिर पनि सोच्दैछन् । हेरौं अलिकति चारो हालिदेलान् जस्तो बुझिँदै छ । कुनै लेखकलाई एक/दुई महिना पाले भने तिनको यात्रावृत्तान्त बजारमा आउन सक्छ । बाटो हेरौं । काठमाडौंतिर बूढा बसे भने एकै महिनामा कर्रा लेखकका रूपमा उत्रन सक्छन् । किन भने त्यहाँ ता पाइलैपिच्छे भाडाका लेखकहरू पाइन्छन् । यता गाउँमा पो उनलाई अलिक अभाव छ, लेखिदिने जनमनहरूको ?

अहिले भने उनको धुन अर्कै छ । यसै पालि उनको कान्छो छोराको बिहे नगरी भएनछ ।

अमेरिकामा बसेको त्यही लक्पके छोराको बिहे गर्नुछ, अब जुँगे बालाई । जुँगे बा, उताबाट यता फर्किएपछि बडो ताउरमार गरेर गाउतिर पस्न थालेको पनि निकै दिन भइसकेको छ । उनले मलाई अमेरिकामा पुगेको उनको छोरोलाई बुहारीको खाँचो परेको छ भन्ने कुरा अलिक अस्ति नै जनाएका पनि हुन्, सहयोगको आशा पनि गरेका हुन् ।

उनले उतै गएको मौकामा मलाई लामो फोन गरेका थिए–'ए साइँला, छोरा पाउने हो भने सरसाउँदा भन्दा ता यस्तै पाउनु पो राम्रो रहेछ । यता ता त्यस्तालाई समाजमा त्यसै भत्ता दिंदोरछ गोरमेन्टले । यसपालि चैं यसका लागि एउटी बुहारी नखोजी भएको छैन । याँ ता जोसुकैले मुख चाटाचाट गरेको र अँगालो मारेर बाटैमा झुत्ती खेल्दै गरेको देखेछ यस मोराले । त्यसपछि त यसले बिहे गरिदेओ बिहे गरिदेओ भनेर ठाडो बुच्छर लाइरहेको छ । मुख सुँखेको र कट्टु मात्र लगाएका मिमहरूलाई देखेर यो मोरो लठेब्रो पनि 'मलाई पनि एउटी केटी खोजीदेऊ न बा...' भनेर रोइरहेको छ । कसरी हुन्छ सहयोग गर है साइँला । तिम्रा आफन्तकोमा यसो कुरा चलाइराख है ।' अमेरिकामा नर्मल भन्दा एबनर्मल छोराछोरी पठाउन सकियो भने काइदाले डलर आउने रहेछ भन्ने उनको ठनाइ थियो ।

पहिले पहिले उनी आउना साथ अमेरिकाको आकासपातालको बयान गर्थे यस पालि ता उनी आइपुग्नै नपाई– 'केटी फेला पाऱ्यौ साइँला ?' भन्दै मेरो घरमा पो पस्छन् ए । मैले पनि उनको पूर्वप्रस्तावलाई स्पष्ट भनिदिएँ– 'केटो के गर्छ, ? कति पढेको छ ? के काम गर्दो रैछ ?, कति वर्षको भो ? कति कमाउँछ ?' भनेर सबैतिर सोध्छन् । मैले ता साँचो कुरा भनिदिएँ । यो भनेपछि सबै दुर्दुर भए है बाबै । मैले ता सकिनँ तपाईंका छोरालाई कन्या जुटाउन । उमेर भिड्किएका कुनै उमेरदार आइमाई खोज्ने हो कि भनेर अस्ति पर मुखियाको घरमा उनकी नोकर्नी गठैका बारेमा कुरा गऱ्या, 'त्यस्ता लक्पके अपाङ्का लागि दिन्न' भनेर झन्डै मारे । मैले पनि 'के अपाङ् भनेको अभिशाप हो त ?' भनेर माझै मुख भनिदिएँ । के गर्नु अब ता खोज्ने पो छाडें बा ।

मेरा कुरा सुनेर मलाई सातो खाउँला झैं गरेर उनले भनेका थिए– 'के भनेको साइँला तिमीले ? अमेरिकामा ४० काटेर मात्र बल्ल बिहेको सुर गर्छन् । उसको ता भर्खर मात्र पो बिहे हुने बेला हुँदै छ । अब तिमीले केही काम गरेनछौ हेरिमात्र राख न तिमी । सात दिनभित्र कोरली केटी भेटिनछु भने ता !' उनले अलिक फुर्ती लगाए । अम्रिकामा गएपछि जे पनि ठीक हुन्छ भन्दै बीचैमा कुरा छाडेर मबाट अलग भए ।

निकैदिन लौरो टेकेर गाउँ डुलेपछि उनी लखतरान भएको बुझिन थाल्यो । उनले शुरुमा जसरी मसँग धाकधक्कु लगाएका थिए त्यसरी भनेजति सजिलो रहेनछ भन्नेमा उनी पुग्न लागेको बुझिन्थ्यो । आज पनि बेलुकापख हत्तु भएर फर्किए उनी ।

के भो ? अब कुरा कतै मिल्यो ? मैले सोधें ।

के मिल्नु ? कस्ता हुन्, मान्छेहरू पनि ? याँ आफ्नो छोरो अम्रिकामा बुढिने भो.....। छैन त अबलाई केही उपाय ? लौ है, अबलाई हार खाएछन् जुँगे बाबैले !' मैले भनें ।

'खान्छन् हार जुँगे बाबै ? छन् उपाय हजार । अजमाउन जान्नुपर्छ ।' उनले मलाई दपेटौंलाझैं गरे ।

'अनि के हेरिराखेको नि ? अजमाउनु नि त । के छन् त्यस्ता उपायहरू ?' मैले भनें ।

'अब पर्चा छिपेर विज्ञान गरौं । अनि केही उपाय होला कि ?' उनले बुहारी खोज्ने नयाँसूत्रको कुरो गरे ।

खुइलिएको तालुबाट





विनोद पौडेल
नमोबुद्ध नगरपालिका-५
कानपुर, काभ्रेपलाञ्चोक

# सुनको कथा



विश्वकै कुख्यात सिरियल किलर बादशाह चार्ल्स शोभराजले, नेपालको विमानस्थलबाट हात्ती छिराउन सक्छु भन्दै हिंडे । नभन्दै सुन तस्करले विमानस्थलबाट सुन छिर्छ कि छिर्दैन भनेर, पटक-पटक ट्राई गर्दैगर्दा क्विन्टलका क्विन्टल सुन छिराइदिए । किलोका किलो सुन त सुटुसुटु विमानस्थलबाट छिर्दै थियो । केही तस्करका नाइके काले, गोरे, खैरे, भैरे जेल पर्दै गए । सुन तस्करी केही मत्थर बन्ने प्रयास गरे, केहीले सुन छिराइरहे । एकाएक सुन त किलोबाट क्विटलमा एक्कैपटक जम्प हान्दिए ।

छिर्‍यो है छिर्‍यो भन्न नपाउँदै ट्याक्सी मै च्याप्पै भइदियो । यो त हात्तीको देखाउने दाँत थियो, चपाउने कुन थियो ? वर्षौं सुन कति भित्रिन्थ्यो विचरा हाम्रो सरकारलाई पत्तै छैन, विमानस्थल व्यापारीको कब्जा, कर्मचारीले पाउँछन् त्यसको भत्ता ।

सेटिङमा भित्र्याइएका त्यस्ता अवैध सुन विमानस्थलको न सीसी क्यामरामले देखाउँछ, न त स्क्यानरले नै पत्ता लाउँछ ? कर्मचारीले थाहा पाए पनि थाहा नपाएझैं एताउता मुन्टो बटार्छ । किन कि ऊ, उनी पनि त्यही सुनले धपक्कै बलिसकेको छ ।

विदेशमा दुःखले कमाएर केही ल्याए, नागरिकलाई घण्टौं केरकार, सुन तस्करले तस्कर गरी ल्याएको सुन भने सीधै ट्याक्सीमा सवार ? बुद्धि पनि कति जानेको, गहना बनाएर सज्याउने टल्काउने सुनलाई स्कुटरको ब्रेकको सुमा हाल्न कस्ले सिकाको तिनलाई?

सुन तस्कर गर्न बुद्धि लगाएझैं मुलुक बनाउन बुद्धि लगाथ्यो भने आज सिंगापुर, हङकङजस्तै नेपालको विकासमा कायापलट हुन्थ्यो । हाम्रा मुलुकको नेताकै संरक्षण सुन तस्करको जालो फैलेको छ । त्यही भएरै हुनुपर्छ ती संरक्षण गर्ने नेताको मुख अहिले कालो छ ।




## सागर शाह


















# नियति



रोहिणी घिमिरे

स्वामी सिद्धेश्वर सनातन धर्म-संस्कृतिका विद्वान् व्यक्ति हुन् । उच्च आसनमा बसेर सिद्धेश्वर स्वामी यसरी प्रवचन दिन्थे- 'हाम्रा हरेक सनातन धर्म-संस्कृतिमा उत्कृष्ट विज्ञान लुकेको हुन्छ । यज्ञमा गरिने हवनकै कुरा गर्ने हो भने, गाईको घिउ हवन गर्दा प्रोपिलिन ग्यास बनी बादल बन्न सहयोग पुग्छ । बादल बनेपछि पानी पर्छ । त्यस्तै हवन गरिएको स्थानको ९४ प्रतिशत वायु शुद्धीकरण भएको पाइएको छ । त्यसै गरी, कुशलाई पानीमा राख्दा सो पानीमा ७ सय प्रतिशत अक्सिजन बढ्ने र कुशले विकिरण पनि सोसेर लिने हुंदा यहां हाम्रो यज्ञमा कुश प्रयोग भएको देख्न सक्नुहुन्छ । यसरी मानवहितका लागि सनातन धर्म-संस्कृति वरदान सावित भएको छ । कतिपय कुरा हामीले अनुसन्धानबाट सिद्ध गरिसकेका छौं ।

यसरी सनातन धर्म-संस्कृतिलाई आधुनिक विज्ञानमा जोडेर दिइएको प्रवचनले सिद्धेश्वर स्वामीप्रति मानिसको आकर्षण बढ्न थाल्यो । देश-विदेशबाट आश्रममा दान दिनेहरूको लर्को लाग्न थाल्यो । यसको व्यवस्थापन स्थानीय राज शर्माले सम्हालेका थिए ।

एकदिन सम्बन्धित मन्त्री आएर सिद्धेश्वर स्वामी र राज शर्मालाई हकार्दै भने- 'यसरी धर्मका नाममा अकूत सम्पत्ति हवन गरी डढाउन पाइन्छ ?' व्यवस्थापक शर्मा ती मन्त्रीभन्दा चतुर थिए । उनले पहिला कुरा बुझौं न मन्त्रीज्यू भन्दै उनलाई गोप्य कोठामा लगे । एकछिन पछि त कोठाबाट निस्किएर म अर्को कार्यक्रममा जान हतार भयो, अहिले यथास्थितिमै चलाउनू भन्दै मन्त्री हिंडे ।

सिद्धाश्रम अनुसन्धान आश्रमले धर्मलाई विज्ञानमा जोडेर धेरै व्यक्तिलाई आकर्षित गरिसक्यो र डोनेसनको समेत ओइरो लागेको छ भन्ने कुरा यत्रतत्र फैलियो । यसको डाढ गर्नेहरू मन्त्रीको जस्तै विरोध गर्न आउन थाले । उनीहरू भन्ने गर्थे- 'मानवजीवनका लागि अत्यावश्यक वस्तु अन्न, घिउलगायत विभिन्न वनस्पतिहरू धर्मका नाममा आगोमा डढाएर नष्ट गर्न पाइन्छ ?'

आश्रमका व्यवस्थापक राज शर्माले केहीलाई त मन्त्रीलाई झैं खासखुस गरे । तर, सबैको चोचोमोचो मिलाउन कहां सक्नु र ? जहां विरोध हुन्छ, त्यहां मिडिया पुग्ने नै भए । मिडियाले झनै आगोमा घिउ थप्ने काम गरे । कुरै नबुझी जतासुकै विरोधको हुइम चल्यो ।

विरोधी समूहका नाइके परिवर्तन माइतीघर मण्डलामा कुर्लिए- 'धर्मको नाममा गाईको पिसाब खाने अनि दही-दूधचाहिं भगवान् भन्दै ठड्याएको ढुंगामा पोख्ने ! त्यतिमात्र नपुगेर घिउ, अन्न, वनस्पति होमका नाममा डढाएर सखाप पार्ने ? यसरी सिद्धेश्वर आश्रमले खानेकुरा सखाप पारेपछि हामीले के खाने नि ? अनुसन्धानका नाममा देश-विदेशबाट करोडौं पैसा असुलिसक्यो । अनुगमनमा आश्रममा पुगेका मन्त्रीसमेत यत्तिको हुंदा पनि चुप छन् । अब हामी चुप लागेर बस्नु हुंदैन ।'

परर तालीको आवाज आयो । परिवर्तन झनै कस्सिंदै भन्न लागे- 'धर्मको नाममा मुलुकको सम्पत्ति डढाएर सकिन लाग्यो । घिउ-अन्न पोल्नु पनि विज्ञानसम्मत अरे ! अब त अति भइसक्यो ।'

यसको केही दिनमै आश्रमविरूद्ध अदालतमा मुद्दा पर्‍यो । उता सिद्धेश्वर आश्रमबाट पनि सनातन धर्म-संस्कृतिको रक्षा गरी शान्ति सुरक्षाको प्रत्याभूति गरियोस् भनी सिडियो कार्यालयमा निवेदन पर्‍यो । संसद्मा समेत केही सांसदले धर्म-संस्कृतिविरूद्धका क्रियाकलाप रोकी सिद्धेश्वर आश्रमलाई सुरक्षाको प्रत्याभूति दिलाउन नसकेको भनी प्रधानमन्त्रीको राजीनामा मागे ।

बाहिरि जिल्लाबाट समेत मानिस ल्याइएकाले भीड नियन्त्रण गर्न पुलिसलाई कठिन पर्‍यो । आन्दोलन भड्किएर नियन्त्रणबाहिर जाने भयले सिद्धेश्वर स्वामीलाई पक्राउ गर्ने आदेश आयो ।

प्रहरीले सिद्धेश्वरलाई आश्रममै गएर पक्राउ गर्‍यो । तर, पुलिसले सिद्धेश्वरलाई भगायो भनेर आन्दोलन झनै चर्कियो । हतकडी लगाइएका सिद्धेश्वर प्रहरी भ्यानमा बसेर गौशाला प्रहरी कार्यालयतिर छिरेको भिडियोसहितको समाचार अनलाइनमा देखेपछि भने धर्म-संस्कृतिका विरोधी पक्षका नाइके परिवर्तनले आन्दोलनलाई मत्थर पारे ।

उता, सिद्धेश्वर स्वामीलाई सम्मानसाथ राख्नू र उनले चाहेअनुसार दिनचर्या सहज बनाइदिनू भन्ने माथिको गोप्य आदेश थियो प्रहरी प्रमुखलाई । प्रहरीले केही दिन अघिदेखि नै सिद्धेश्वरका दिनचर्या र आनीबानीका बारेमा सूचना संकलन गरिसकेको थियो ।

पक्राउ परेको सातौं दिनमा सिद्धेश्वरको जन्मदिन पर्ने रहेछ । उनी आफ्नो जन्मदिनमा बर्सेनि पोखराको तालबाराही मन्दिर दर्शनार्थ जाने गरेका रहेछन् । किनकि तालबाराही प्राङ्गणमै सिद्धेस्वरलाई जन्म दिएर उनकी आमा पानीमा हामफालेर आत्महत्या गरेकी रहिछन् । यो कुरा प्रहरीलाई पहिले नै थाहा भइसकेको थियो । त्यसैले प्रहरीबाट सिद्धेश्वरलाई सोधनी भयो- 'केही इच्छा भए जानकारी पाऊँ ।'

'हरेक जन्मदिनमा पोखरा तालबाराहीको मन्दिरमा जाने गरेकोमा यस वर्ष पक्राउ परेका कारण जान असमर्थ हुने भएँ । सो दिन पशुपति मन्दिरमा भए पनि लगिदिन मिल्छ कि ?' -सिद्धेश्वरले आग्रहको परामा भने ।

प्रहरीले कसैसंग फोनमा कुरा गरेको सुनियो तर कुरा के भए, थाहा हुन सकेन । पक्राउ परेको सातौं दिन सिद्धेश्वरलाई पोखरा पुर्‍याइयो । मुद्दाको टुंगो नलागेसम्म पोखरामा लगी थुनामा राख्ने भनेर पोखरा पुर्‍याइएको समाचार प्रसारण गरियो ।

प्रहरीको एक टुकडीले सिद्धेश्वरलाई तालबाराही मन्दिरमा लग्यो । मन्दिरबाट फर्कने क्रममा प्रहरीसहित उनी चढेको डुंगा अचानक घोप्टियो । प्रहरीहरू तालिमप्राप्त भएकाले पौडिएर अर्को डुंगा चढ्न सफल भए । डुंगा चालक पनि पौडिएर बाँचे । तर, सिद्धेश्वर पानीभित्रै बिलाए । उनलाई बचाउन प्रयास गरेको देखिए पनि बचेनन् । सिद्धेश्वर चढेको डुंगा पल्टिएर उनको मृत्यु भयो भन्ने समाचारले अनलाइनहरू भरिए । यता काठमाडौंमा धर्म-संस्कृतिविरूद्धको आन्दोलन सफल भएको रूपमा लिइयो । उता, सिद्धेश्वर आश्रम राज शर्माकै नेतृत्वमा सञ्चालन भइरह्यो । सरकारमा रहनेहरूले पनि राजीनामा दिनुपरेन, सत्ता टिकिरह्यो ।

परबाट यी सबै कुरा नियालिरहेकाहरू भन्दै थिए- नेपालको नियति नै यस्तै छ ।









# लौ आयो स्वर्णयुग आयो

विजयरत्न तुलाधर



लौ आयो आयो स्वर्णयुग आयो ! के स्वर्णयुग आएकै हो त ? खै ! कहाँ आयो स्वर्णयुग भनी सोधनी भो भने जवाफ हाजिर छ ।

लौ सुन्नोस् । हो नि ! यहाँ स्वर्णयुग त आएकै हो नि ! किनभने यहाँ चारैतिर सुनकै कुरा चलिरहेको छ । एयरपोर्टमा सुन, ड्राइपोर्टमा सुन, पासपोर्टमा सुन, जताततै सुनैसुन । कोटेश्वरदेखि त्रिपरेश्वरसम्म सुनैसुन । संसारमा सुन, भन्सारमा सुन, राष्ट्रपति भवनदेखि पशुपति मन्दिरसम्म सुनै सुन । प्रधानमन्त्रीको मुखारबिन्दबाट पनि उच्चारित हुन्छ सुनकै कुरा । हाकिमदेखि पियनसम्म पनि चर्चा हुन्छ सुनकै कुरा । अनि भन्नोस् त ! आएन त स्वर्णयुग ? एक जनाले पशुपतिमा चढाएको स्वर्ण जलद्रोणमा आफ्नो नाम लेखाएछ । अर्कोले त्यो नाम हैन त्यहाँ चढाइएको सुन नै किलोका किलो गायब पारेछ । मन्दिरमा चढाइएका सुनका गहनामा सुनको जलप मात्र रहेछ । सुन जम्मै अलप भएछ । यहाँ विमानस्थलमा थन्क्याइएका विमानका बडेमानका पांग्राहरू क्षणभरमा अलप हुन्छ भने जाबो स-साना साइजका सुनको के कुरा ?

नेपालमा चारैतिर सुनको वर्षा भइरहेको छ । त्यो पनि एक किलो दश किलो हैन ! क्विन्टलका क्विन्टल वर्षिरहेको छ । वर्षेका सुन गायब छ । तर सुनको भेलमा बगेर एक जनाको होस नै चेत छ ।

घरमा जसको हात मुख जोर्न हम्मे-हम्मे छ, त्यसैको रहेछ सुनको फ्याक्ट्री ! घरमा बिरामी परेका परिवारलाई पुऱ्याउन सक्या छैन उपचार डाक्टरी, त्यसैको रहेछ सुनको फ्याक्ट्री !

फ्याक्ट्री त फिलिमको पनि एक जनाले खोलेकै थियो । नामै ले चिरञ्जीवी हुने वरदान पाएका थिए उनले । एकपछि अनेक गर्दै फिलिम बनाएकै थिए । फिलिम सबै चिलिम भएपछि फ्याक्ट्री न स्याक्ट्री भन्दै फिलिम नगरीबाट अलप भए । न त्यो बस्नेतले फेरि फिलिम बनाए न त अर्का बस्नेत भन्नेले फिलिम बनाउन आँट गरे । डाँडापारिको वरपीपलको छहारीमा बसेर टुलुटुलु हेरिबसें । भुवन, शिव, गौरीजस्ता बूढापाकाहरू जम्मा पारेर काम कुरो नबनेपछि अब छोरा पुस्ताकै जय होस् भनेर जय हुने दिन पर्खिरहेका छन् ।

फिलिम सबै चिलिम हुन थालेपछि दयाराम भन्ने नाम चलेका निर्देशकले फिलिम बनाए न त फिलिम साम्राज्य खडा गर्ने धोको बोकेका पौडेलले नै फिलिम बनाए । झन् उल्टै फिलिमसँग नाता जोडेर खोलेको टिभी च्यानलसमेत पो बन्द गरे । आफू पनि नेता, ज्वाइँ पनि नेता परेपछि अहिले राजनीतिमा उनीहरूको चुरिफुरी बढेको छ रे । घण्टीको स्वर ठूलै स्वरमा बजिरहेको छ रे !

देशमा स्वर्णयुग आउनुभन्दा अघि नै फिलिममा स्वर्णयुग ल्याउने धक्कु छोडेर एक जना सदावहार कलाकार विकास बोर्डको अध्यक्ष बन्न गएथ्यो । स्वर्णयुग कोइला युगका कुरै छाडौं, फिलिम त जीर्णयुगतिर पो लम्कन थालेछ भन्छन् बा !

फिलिम कुन युगमा छ भनि जाँच्ने कसले ? फिलिम बजारमा फैलिएको विदेशी बजारको जालो तोड्ने कसले ? फिलिम देखाउन हुन्छ कि हुन्न भनी जाँच्न बसेकाहरूले त विदेशबाट आएका आदिपुरूषलाई जाँच्दै नजाँची फुत्त हलभित्र छिराए ! नेपालको मानमर्दन भएको छ वा छैन भनी हेर्नै सकेनन् । उल्टै एउटा नेपाली फिलिमलाई भने झन्डै काँडेतार पो लाउन खोजे बा ! के हो यो चाला ? बुझ्नै गाह्रो !

बुझ्न त फिलिमवालाहरूलाई पनि गाह्रो छ बा ! कुनै जमानामा फिलिममा बक्स अफिस लागू भएन भनेर रोइकराइ गर्ने पनि फिलिमवालाहरू नै थिए । अहिले आफ्नो फिलिमको आम्दानीलाई नांगो उदांगो पारिदियो भनेर कराउने पनि तीनै फिलिमवाला नै हुन् । हाम्रा फिलिमवालाहरू पनि अचम्मका रहेछन् । बक्स अफिस खोलिदिंदा पनि बबाल, नखोल्दा पनि बबाल । कुनै फिलिमको तीनटा मात्र टिकट बिक्री भयो भन्दा पनि बबाल, कुनैको लाखौं थान टिकट बिक्री भयो भन्दा पनि बबाल, बबालैबबाल आखिर चारैतिर बबालैबबाल !

यो फिलिम क्षेत्र भनेको एउटा बगान त हो यानि कि बगैंचा हो । यहाँ फुलेका वा नफुलेका फूलको जिम्मेवारी सम्बन्धित मालिको नै हुन्छ । कुनै महापुरूष आएर छक्का पञ्जा गर्न सक्दैन, किमार्थ सक्दैन । जारीले व्यापार जारी राख्दा मैले बिहे पास नै गर्न सकिनँ भनेर रोइकराइ गरेर हुंदैन । जारी भनेको त बिहे भएको नारीलाई न गर्ने हो ! त्यसैले बिहे त पास गर्नै पऱ्यो ! नाकमा बुलाकी लगाएर उफ्रीफाफ्री गरेरमात्र हुंदो रहेनछ ! फिलिम भनेको त मान्छेले रूचाउने पऱ्यो, दर्शकले पचाउनै पऱ्यो ! अनिमात्र हुन्छ विकास, सँगसँगै फिलिमले पाउनेछ निकास !

निकास दिन्छु भनेर बोर्ड अध्यक्ष बनेका केसीलाई अहिले आपत् परेको छ । निकास खोज्न आइडिया सापट खोज्दै छ । आइडिया दिइहाल्ला कि भनेर बिकास बोर्डमा सल्लाहकारको बथान ल्याए । विकास निकास त कुरै छोडौं, विनाशको बाटोतिर डोरिन थालेपछि सबै सल्लाहकारको भागाभाग ! अध्यक्षको हातमा परेन गैंडाको खाग ! फिलिमवालालाई मासुभात खान सक्ने बनाउने सपना देखाउने अध्यक्ष न आफू करोडपति बन्न सके । न त फिलिमवालालाई साथी म तिम्रो नै भन्न सके । स्वर्णयुगमा लैजाने अनमोल ड्रिम्सले न त आफ्नो दुनो सोझ्याउन सके, न त विदेशी फिलिम बजारको साम्राज्य नै तोड्न सके । साम्राज्यको त के कुरा उल्टै साम्राज्ञीले पो बोर्ड अध्यक्षमाथि रजाइँ गरेपछि परेन त फसाद !

फसाद-ससादको कुरा भो अब नगरौं । स्वर्णयुग स्वर्णयुग भन्ने सपना बुनिरहेकाहरूका फिलिम जीर्णयुगतिर लम्कन थालेको छ । सरकारले देशी फिलिमलाई भन्दा पनि विदेशी फिलिमलाई काखी च्यापेको छ । विदेशी फिलिमको एक प्रतिशत रे ! नेपाली फिलिमलाई जीर्णयुगतिर ढकेल्न अनेकन कसरत रे !

अनि विदेश मोह बढ्नु स्वाभाविक नै हो । नेपाली जनता विदेशमा गएर रोजगारी खोज्नमा तल्लीन छन् । फिलिमवाला पनि विदेशमा गएर अवार्ड बाँड्न तल्लीन छन् । अवार्ड कसले किन पाउँछन्, थाहा पाउन गाह्रो छ ! अवार्ड पाउन पनि ढुंगा चपाउनु जस्तै साह्रो छ । अवार्ड लिन विदेश जाने पऱ्या छ ! मौका मिले उतै हराउनु पऱ्या छ ! कुन देशमा को हराए, लेखाजोखा छैन ! अड्तीस जना क्यानाडा जान्छन् तर फर्किंदा सात/आठ जनामात्र फर्किन्छन् । नफर्किनेका कारण अवार्ड आयोजकको ढुकुटीमा सुनैसुन भित्रिएको छ । अवार्ड पाउने दंग, नपाउने पनि विदेशमा लुक्न पाएर फुरूंग ! झन् आयोजकको ढुकुटी स्वर्णयुगतिर लम्केपछि हुने नै भयो फुरूंग ! यसरी देश स्वर्णयुगतिर लम्किरहेको छ । नेपाली फिलिमवालाहरू उल्टोबाट चम्किरहेको छ ।





# पानसिंह टोमार




पैसो भएका चोर,फटाहा,
डन,दलाल, ठेकेदारजति
यता हैं!
पार्टी प्रवेश
कार्यक्रम
Panshing'22


बालख मार्ने रेशम छोड्यौ,
फिदक पिट्ने गुण्डा छाड्यौ,
अब आलम कहिले
छोड्छौ त?
किन?
देख्रा नै
छोडेर भाग्न!
Panshing'23


यी भाउजु,मन्जु र आरजु त
झनै खतरनाक रहन
बई!
NEWS
आरजु र मन्जु
को अडियो
रेकर्ड पनि
पुलिसकोमा!


केही समय पछि त पितीहरूले
जलहरीलाई तिलहरी बनाउछन्
कि
के?
Panshing'23


तपैंलाई पाँच बर्ष
आधि गरेका पुराना बाचा
हरु याद छ हैन?
छ नि, किन..
नहुनु? त्यसैलाई फेरि
दोहोर्‍याउन त म
यहाँ आको!


सहकारीको ब्याज
र प्याजको भाउ,...
उफ्फ!!
Panshing'23


टोपजस्तो माइे
लाई पनि टाप
भन्ने? यहाँ त बर्दली
मा हुनुहुन्छ ति!
Panshing'23


सीता जी नेपाल मा जन्मे
को देखाउछौ कि
आदिपुरुष लाई आधी
बनाउन डोजर हान्दिम!
TV
NEWS


नामै स्वतन्त्र भए पनि हामी
काँग्रेशमा गए नि भो
एमाले गए नि भो!
NEWS
Panshing'22


नेकपा(एमाले)
नेपाल कमिशन
पार्टी
हाम्रो पार्टीमा
भ्रष्टाचारी
छैनन्!
Panshing'23


पूर्व उपप्रधानमन्त्री
त भन्नै नहुने भो! तपैं
पनि होर शरणार्थी काण्ड
-मा-भन्छन!
Panshing'23


मालिक
तोफा कुबुल
किजिए!
नागरिक
विधेयक


समृद्ध नेपाल
को यात्रा अझै
जारी छ!
मूल्यवृद्धि
महँगी
Panshing'23


लौं.. आयो
नागरिकता हजुर
सस्तो सस्तो!
यू.पी.
विहार
Panshing'23


भारतीय
राजदुतावास
लौन चोर
लौ त प्रभु
छिटो भ्रमणको लागि
बोलाउन परो!
विन्ति
पत्र!
-प्रचण्ड
Panshing'23


!?
भ्रष्टाचार
भ्रष्टाचारले जनता
आक्रान्त!


भर्ना खुल्यो!
ABC प्राईभेट सेकेण्डरी
स्कूल
लेखा
शाखा
छोरा स्कूल भर्ना
गर्न आको त आफै हस्पिटल
भर्ना हुनु पर्ली जस्तो भो! सबै
लुटे डाम्नाहरूले!!
Panshing'23


मुल्य
वृद्धि
'मल'
मैले त
महल भन्याको
त मल पो
रहछ बैड!
Panshing'23


को हो त्यो हँ, मलाई
नेता भन्ने? स्याला डन
लाई नेता भन्ने!
Panshing'23


हरियो हरियो
नोट पनि कहीं कालो
हुन्छ र भन्या?!
कालो
धन
Panshing'23


बाढी पहिरो रोकथामको तयारी केछ?
मन्त्रीको भ्रमण
को लागि
हेलिकप्टर।
समाचार लेख्न
पत्रकार।
सरकार एक
दमैसँग सचेत
छ!
Panshing'23





चुनाव जित्न परे गोरखा जानु! प्रधानमन्त्री बन्नुपरे दिल्ली जानु!!
Panshing'23




माफ गर्नु होला, सहकार्य गर्न असमर्थ छु!
सहकारी
Panshing'23




ए सुन पो लैजाउ लैजाउ, म त लसुन हो कि भनेर चेक गरेको नि!
भंसार (आगमन)
Panshing'23




समृद्ध नेपाल र सुखी नेपाली बनाउने रे!
घोषणा पत्र
२० लाख रोजगारी ग्यारेन्टी गर्दों रे!
Panshing'22




किसानको मंसीर भने झैं नेता, कर्मचारी र ठेकेदारको त असार मसान्त रे बाली नगद भित्र्याउने बेला!
Panshing'23




कि त्यो जोगीलाई फाँसी दिनपर्‍यो कि मलाई फेरि प्रम बनाउन पर्‍यो प्रभु!




लौ चिन्नुस्, म ढाका कुमार कि डाँका कुमार हो?!
रास्वपा नेता ढाका कुमारद्वारा २ करोड घुसमाग
Panshing'23




"गृहमन्त्री" दिने कि नदिने? नत्र, म त फेरि अम्रिका गई दिन्छु है!
Panshing'22




म हुँ नेपाली बाबु मेड इन भारत!
भारत
Panshing'23




हेपारो झैं रंग फेर्ने हामीलाई नि ह्याप्पी होली!!!
TV
NEWS
Panshing'23




अब कसरी कालोमोसो लाउदो रहेछ हेर्नु त? लौ हैं, केटा यो महिनाको कोटा छिटो पुरा गर्नु!
खतरा बैंक
Panshing




सहकारी बेच्ने हो की भइयाँ?!
सहकारी
Panshing'23




निर्दोषलाई टोक्न पाइन्दैन!
Panshing'23




युद्ध अपराधी पुटिनलाई तुरुन्तै कार्बाही गर!
Panshing'23




अभाव
महंगी
आर्थिक मन्दी
ढुक्क हुनुस् आर्थिक मन्दी हुँदैन देशै!
Panshing'23




बरु होली वाइन खाने चैं खाँती एमाले हुन सक्छ है कमरेडहरु!
Panshing'23




Panshing'23




"कारबाही गर" भन्छु सबै जना मलाई पो हेर्छन् बा!
भ्रष्टाचारीलाई कारबाही गर!
Panshing'23




तपैंको नि नागरिकता छैन रे हो नेताज्यू?!
कसले भन्छ रे बे! मसँग झन् तीन वटा नागरिकता छ!
Panshing'22




असार १५ को रोपाइँ र दही चिउराको लागि सबै तयारी भो, अब सानो खेत किन्न बाँकी भो!
Panshing'23




छोरोको स्कूल ब्याग बोक्न एउटा भरिया पनि संगै स्कूल पठाउन पर्‍यो! म त सक्दिन तेत्रो भारी उठाउन!
NEWS
साना नानीहरूलाई अनावश्यक किताबको भारी

# नपाउनेले के पायो चोक्रैसम्म चपायो



किरण केसी (रातामकै)

राम्री छैन भने ओठमा लाली भएर के भो?.
व्यावहार राम्रो छ भने काली भएर के भो?
मनभित्र कलुषित भावना गुम्सिएको छ भने बिहान हातमा पूजाको थाली भएर के भो ?.
फूलहरू भमरासँग जिस्किरहेकै छन्, बगैंचा हेरचाह गर्ने माली भएर के भो?
कोही बहालमा बस्न आउँदै आउँदैनन्, जीर्ण घरका कोठाहरू खालि भएर के भो? पुरानो उखान भुसुक्कै बिर्सिसकेकी क्या हो, मधु तेरो ससुरालीमा साली भएर के भो?
जे गरे पनि यहां छुट छ हजुर
आपसमा नै यहां फुट छ हजुर
गल्ती नभएर पनि शंकाको भरमा निलो मान्छेले त्यसै कुट्छ हजुर
पहिले फाटेको लुगा लगाउँथ्यो उसले
अचेल पहिरनमा सुट छ हजुर
केही प्रगति गर्न खोज्दा खुट्टा तान्ने भित्रभित्र एउटा गुट छ हजुर



# रविको विरोध

प्रदिम्न पौडेल

बह्रभाइ रविको विरोधमा
फलौटे युवराज रविको विरोधमा
गजेडी समाज भीमे रविको विरोधमा
बाह्रभाइ पुच्छर रविको विरोधमा
कपुरकोटे सन्तोष रविको विरोधमा
भोले, खोले र टोले रविको विरोधमा
कांग्रेस, माओवादी र एमाले रविको विरोधमा
बाखे नेता, राम्रै नेता, विश्व नेता रविको विरोधमा
भ्रष्टचारी, बलात्कारी, अपराधि रविको विरोधमा
सामाजिक अभियन्ता रविको विरोधमा
मिडिया, विकासे पार्टी रविको विरोधमा






# पाँच छेस्का...



भीम राना जिज्ञासु, गोर्खा

देशमा के सुशासन छ भन्नु-जता हेर्‍यो त्यतै बेथिति छ
भुटानी शरणार्थी, लालिता निवास र सुनकाण्डले भयावह स्थिति छ

भन्न त सरकार तस्कर र भष्ट्रचारीलाई कारबाही गर्छु भन्छ-
तर, यहाँ 'ठूला माछालाई हैन साना माछालाई' समात्ने चलनचल्ती छ !

एयरपोर्टको मेसिनले अचेल सक्कली सामान जाँच्न सक्दैन
बिग्रेकालाई सपार्छु भनेर जो-कोही जर्मुराएर तात्न सक्दैन
बिग्रेको देशको भत्केलो चाल भएर होला सम्बन्धित निकायले
'एक कुइन्टल सुन ल्याउनेलाई' झुक्केर पनि समात्न सक्दैन !

भ्रष्टाचारको बाली मात्रै हलक्कै बढ्ने देश हो यो
सरकार जोगाउन मात्र मरिमेटर खटने देश हो यो
कहिले त लाग्छ, कहींकतै नभएको संस्कार छ यहाँ-
पेट्रोल डिजेलको भाउ घटे पनि गाडीको भाडादर नघट्ने देश हो यो !

देश बनाउँछु भन्नेहरु जब सत्तामा पुग्छन्
काम-कर्तव्य बिर्सेर लट्टिपट्टी गर्नमै रमाउँछन्
आखिर जुन जोगी आए पनि कानै चिरेका हुन्
खासमा 'आफ्ना र आफू बन्नतिरको' हाँगा समाउँछन् !

बालेन र हर्क साङपाङ पनि केही न केही कुरामा फसेको देख्छु
गाउँठाउँ बनाउँछु भन्ने एजेन्डामा हल्का धमिरा पसेको देख्छु
अरूले भन्दा यिनले केही गर्लाा कि भन्ने केही आस छ-
तर, यिनले पनि केही समुदायको घाँटीमा छुरा धसेको देख्छु !








श्याम स्मृत

# लुटौं-भ्रष्ट नेता र कर्मचारीको लकर

लुट्नसम्म लुट कान्छा भनेर भन्ने जमाना आएको छ । त्यो लुटचाहिं गरिब नेपाली जनताको ढाड सेक्ने गरेर आएको महँगीले जस्तो लुट्ने होइन । देश र जनतालाई लुट्नसम्म लुटेका भ्रष्ट नेता र कर्मचारीको लकर खोजी खोजी लुट्ने हो ।

राजनीति दुई शब्दले बनेको हुन्छ राज+नीति । यसको अर्थ नियमअनुसार गरिने सुशासन हो । विशेष उद्देश्यका साथ देश र समाजलाई राज्यको नीतिभित्र रहेर परिवर्तन गराउनेलाई राजनीति भनिन्छ । राजनीतिको यति धेरै राम्रो शब्दार्थ भए तापनि राजनीतिलाई कमाऊ धन्दा बनाउने भ्रष्ट नेताहरू मात्र होइन, तिनै नेताको आडमा भ्रष्ट बनेका सामन्ती सरकारी कर्मचारीको लुटतन्त्रको खुलेर भण्डाफोर गर्नुपर्दछ ।

राजनीतिको नाममा कमाउ धन्दा चलाउने भ्रष्ट कर्मचारीदेखि नेतासम्मले भ्रष्टाचार गरेर कमाएर स्वदेशी तथा बैंकदेखि स्विस बैंकसम्मका लकरमा लुकाएका अकूत सम्पत्ति गाईजात्राकै दिन स्काई वाकमा पुगेर डियर वाकको स्टाइलमा उनीहरूको स्वदेशी बैंकदेखि स्विस बैंकसम्मका लकर लुट्नैपर्छ । ती भ्रष्ट सामन्तीहरूका बैंक लुट्न टाइगर वाक गर्ने यो देशका लागि बालेन साह, हर्क साङपाङ राई, सुनीता डंगोलजस्ता तन्नेरी युवा नेताको जमात आवश्यक छ । नेपाली जनताको खुन-पसिना चुसेर लुकाएका ती अकूत सम्पत्ति लुट्दैमा धरोधर्म भगवान् पशुपतिनाथको कसम कसैलाई पाप लाग्दैन । बरू, ती लकरबाट लुटेका भ्रष्ट नेता तथा कर्मचारीका अकूत सम्पत्ति गरिबलाई बाँडेर अनि देश विकासमा लगाउने यो देशमा सही सपुतको खोजी तपाईं-हामीले किन ढिला गर्ने ???

ढिला गर्ने त कुरै छैन । तपाई-हामीबाटै रामायण युगिन हनुमानजी तथा महाभारत युगिन अर्जुनजीका जस्तो तीर चलाउन जान्ने निस्कलंक सपुतको खोजी गर्न र गराउन तपाईं हामी नेपाली जनताकै जिम्मेवारी हो । यो जिम्मेवारीलाई प्रत्येक पाँच वर्षमा आउने स्थानीय, प्रदेश तथा संघीय चुनावमा तपाईं-हामी मासु-चिउरा र एक क्वाटर ह्विस्कीमा साट्नु भएन ! हो, तपाईं-हामीले मासु-चिउरा र एक क्वाटर ह्विस्कीमा साटेकै कारण आज तपाईं-हामीलाई भ्रष्ट नेता तथा कर्मचारीले लुट्नसम्म लुटिरहेका छन् । चुनावका बेला मासु-चिउरा र क्वाटरका क्वाटर ह्विस्की मात्र नखुवाइकन केही पैसाको बिटा हातमा दिएर हामीलाई लुट्ने लाइसेन्स लिने तिनै नेतालाई चिन्न अब गाह्रो मान्नु भएन । अनि हामीले तिरेको करवाट तलब खाने उही सरकारी कर्मचारीले तिनै भ्रष्ट नेताको आडमा हामीमाथि राज गरेर हामीलाई नै लुट्ने ती भ्रष्ट सामन्ती कर्मचारीलाई कालोमोसो गरेर डाडो कटाउन ढिलै गर्नहुन्न !

चुनाव नजितेसम्म तपाईं-हामीलाई जिउहजुर गर्ने तिनै नेता हुन् ! जसले चुनाव जितेपछि तपाईंलाई चिन्नै छाड्छन् । उल्टै तपाईं-हाम्रै टाउका-टाउकामा डोजर चलाउन लाज मान्दैनन् । त्यस्ता लाज पचुवा अनि आफैले खाएको थालमा फोहोर गर्ने ती भातमारालाई त्यसै छाड्नु भनेको धरोधर्म आमाको रगत चुस्नु बराबर हो । त्यसैले त्यस्ता भातमाराहरूलाई लुट्नुसम्म लुट्नु भनेकै देश तथा समाज बचाउनु हो । उनीहरू एक-एक गरेर सबैलाई लुटौं अनि देश बनाऔं ।

## गाईजात्रे ब्युटी टिप्स

१) तपाईं-हाम्रो जीवन हिजोआज मेसिन जस्तो भइसकेको छ । मेसिनरी जीवनमा भ्रष्ट नेता तथा कर्मचारीले हामीलाई फोहोरी बनाइरहेको कुरामा कुनै शंका छैन् । त्यस कारण ती भ्रष्टलाई बञ्चरेडाँडामा लगेर डम्पिङ मात्र होइन, कपाल स्ट्रेट गरेजस्तै गरेमा तपाईं-हामीमा परेको फोहोर हट्ने निश्चित छ ।

२) फेसमा डण्डिफोर लगायतका घाउ आउनु भनेकै फोहोरी नेता तथा कर्मचारीका कारण हो । त्यसैले बेलुका सुत्ने बेला २-३ गिलास मनतातो पानी खाने गर्नुस् । अनि भुंग्रोजस्तो तातिएको अर्को गिलासको पानी ती फोहोरी नेता तथा कर्मचारीको मुखैमा फाल्दा त्यसले तपाईंलाई निकै राम्रो फाइदा गर्छ ।

३) ब्युटी रहन सधैंजसो चिल्लो खाना कम खाने गर्नुस् । उमेरअनुसार र मौसमअनुसार फेसियल पनि गर्ने गर्नुस् मात्र भन्दा तपाईंलाई अन्याय हुन्छ । तसर्थ, पापी, भ्रष्ट तथा सामन्तीहरू एक-एकलाई पक्रेर उनीहरूको सारा शरीरमा तातो न तातो पन्युले फेसियल गर्नुपर्छ भन्दा साह्रै न्याय हुन्छ । तपाईं त्यसै गर्नुस् है ।

४) पानी धेरै पिउने गर्नुस् । त्यसले तपाईंको छालालाई चमकदार बनाउन सहयोग गर्दछ । त्यो चमकदार छालामा रजाइं गर्ने ती गोरू नेता तथा कर्मचारीको रगत मज्जाले पिउने बाघको पनि खोजी गर्नुस् न ल !

५) जाथाभावी बजारिया साबुनको प्रयोग अनुहारमा नर्गनुस् । बरू अर्गानिक निम प्याकहरू प्रयोग गर्नुस् मात्र म भन्दिन । विदेशी दलाल तथा विदेशको इशारामा नाच्ने दलाल नेताहरूलाई चारकोशे झाडीवाट मात्र होइन, काँडेतार पारि नै हुत्याउनुपर्छ भन्छु । यसमा तपाईंको कुनै यतराज त छैन नि !

६) गुलियोभन्दा बढी तीतो खानेकुरामा बढी जोड दिनुहोस् । गुलिया नेताभन्दा तीता नेता नै रोज्नुहोस् । गुलियोले भन्दा तीताले औषधिको काम गर्दछ ।

७) डण्डिफोरको घाउका लागि कागती फेसमा लगाउने गर्नुहोस्- दिनको एकपटक बिहान वा बेलुकी । तर, भ्रष्ट नेता तथा कर्मचारीको फेस आफ्नो फेसमा भुलेर पनि कदापि नलाउनुस् । यसले झन् डण्डिफोर बढाउने गर्दछ ।

८) काँचो बदाम बेलुकी भिजाएर बिहान खाने गर्नुहोस् जसले तपाईंलाई तन्नेरी राख्न मदत गर्दछ । भ्रष्ट नेता तथा कर्मचारीले तपाईंलाई दिउँसै अन्धकार मात्र नभइकन बूढो नै बनाइदिने गर्दछ । होसियार है ।

९) यसबाहेक जीवनशैलीलाई प्राकृतिक एवं मानसिक तनावरहित बनाउनुहोस् । खानपिन टाइम टेवलमा खानुहोस् । भ्रष्ट नेता तथा कर्मचारीको चंगुलमा कहिले पनि नपर्नुस् । उनीहरू स्वास्थ्यका लागि हानिकारक छ ।

१०) हरेक समय तनावमुक्त हुनुपर्दछ । कथंकदाचित तनाव भैहालेमा पनि सहजरूपमा लिएमा सरल तरिकाले समाधान गर्नु पर्दछ । ज्यादै तनाव भएको बेला मज्जाले सुत्नुस् या मज्जाले नुहाउनुस् । ठीक भैहाल्छ । तर, कहिले पनि भ्रष्ट नेता तथा कर्मचारी ब्रान्डबाट नुहाउने काम भने कदाचित नगर्नुस् । यति जानीलिएमा सबैलाई राम्रो नै राम्रो ।



# गरिबलाई बाँच्ने वातावरण नै छैन

ज्ञानमणि नेपाल कालोटोपी
मण्डनदेउपुर नगरपालिका-१०, काभ्रे

एकादेशमा एउटा गरिब थियो । उसका आठवटा बंगला थिए । ती बंगलामा उसले करिब सय परिवारलाई आश्रय दिएको थियो । उनीहरूबापत उसले केही लिँदैनथ्यो । महिनामा त्यही ४०/५० लाख भेटी उठाउँथ्यो । त्यो गरिबका त्यही १०/१५ वटा जति गाडी थिए । ती गाडीमा उसले ४०/४५ जनालाई काम दिएको थियो । उसले नोकरचाकर पनि राखेको थियो । बिहान सुनको थालमा भात खान्थ्यो, बेलुका सुनको हात्ती चढेर शौचालय जान्थ्यो । यति दयालु थियो कि भीख माग्न बसेको भिखारीको भाँडामा भएको एक रूपियाँ पनि बाँकी राख्दैनथ्यो । सबै कुम्ल्याएर उनीहरूको उद्धार गर्थ्यो ।

एकदिन त त्यो भिखारीले यतिसम्म गऱ्यो कि, त्यही जाबो सय किलो सुन एयरपोर्टबाट ल्याएछ । पुलिसले के-के न भनेर बरामद गरेको नाटक गरेछ । कस्तो पुलिस रैछ त्यो, जाबो २/४ अर्बको सुनमा पनि के आँखा लाइराको होला ? मलाई हिजोआज अचम्म लाग्छ । नेपालजस्तो विश्वमै धनी देशमा पनि यति गरिब मान्छे रैछन् भनेर ।

हिजोआज त्यो गरिब आफ्नो पहिचान जोगाउन कहिले दिल्ली त कहिले सिंगापुर धाउँदै छ । २/३ वटा हेलिकोप्टर किनेको छ रे उसले । देखाउँदै हिँडेको छ भन्ने सुनिन्छ । खासमा अहिले यही गरिबका कारण देशको सरकार नै हल्लिएको छ रे । कतिखेर कुसीर्ण छोड्नुपर्ने हो भन्दै प्रधानमन्त्री त प्रभुको शरणमा छन् रे । अरु मन्त्री पनि त्यो गरिबको खोजीमा छन् रे । पत्ता नलागेर हैरान भएका छन् भन्ने सुनिन्छ ।

खासमा नेपालमा गरिबलाई बाँच्ने वातावरण नै छैन । केही गर्न खोज्यो फ्कि सबैजना खुट्टा तान्न थालिहाल्छन् । सबै आफ्नो दुनो सोझ्याउँछन् । यति धेरै धनी देश छ नेपाल । यहाँका मानिस किन यति धेरै गरिब भएका होलान् ? मन किन गरिब यिनीहरूको ? के हामीले चाहिँ केही गर्न नपाउने हो त ? खोजी-खोजी लखेट्नै पर्नि ?

अस्ति केही साथीलाई भुटानी शरणार्थी बनाएर विदेश पठाइदिएको । त्यसमा पनि नक्कली शरणार्थीको आरोप लगाएर खेद्नु खेदे । ललिता निवास जग्गा यसो केही आफन्तलाई मिलाइदिएको थिएँ, त्यो पनि देख्नै सकेनन् । अनेक बाहानामा गरी खान नदिने भए भगवान् । पशुपतिमा जलहरी राख्न त्यही एक/दुई अर्बको सुन के ल्याएको थिएँ, त्यसमा पनि मलाई सक्याउने खेल भयो । अलि-अलि खानै नपाए त कसले काम गर्छ र ? कसले खाएका छैनन् यहाँ ? को छ चोखो ? जाबो गरिबले दुःख गरेको पनि देखिनसहनेको कहिले होला भलो ? के हामीले चाहिँ जहिले नि जोत्ने मात्रै हलो ?

केही धनी आएका थिए मसँग । यसो उनीहरूको पनि उद्धार होस् भनेर २/४ अर्ब सहयोग गरेको थिएँ । अहिले उनीहरू नै जाग्दैछन् रे । मिटरब्याज पीडित भए रे । सित्तै खानुपर्ने तिनलाई ? उति बेला चैं हामी गरिबकै चाहियो, अहिले पीडित भनेर पाइयो ?

सुनिन्छ सरकार भ्रष्टाचारका फाइल एक-एक गरी पल्टाउँदै छ रे । पल्टाएर के गर्छ त्यसले ? पल्टिने मात्र त हो नि । पहिले पनि नपल्टिएका हुन् र ? खासमा देश चलाउने नै गरिबले त हो नि । नत्र मान्छेले केका लागि गर्छ राजनीति ? यहाँ लुट्न नपाए को सर्छ अघि ? अवसर पाएको बेलामा कसले छोड्छ ?

यहाँ पछिल्ला दिनमा बालेनसालेन पनि चर्चामा छन् । उनीहरू हामी गरिबका घर खोजी-खोजी भत्काउँदै छन् रे । हेरौंला कसरी आउँदो रैछ मेरो यो झुपडी बंगला भत्काउन ?

अब हामीले देश लुट्न पाउनुपर्छ । नत्र आन्दोलन हुन्छ । विद्रोहको आगो बल्छ । २/४ अर्ब ठग्न पाउनै पर्छ । १०/२० जनालाई मार्न पाउनै पर्छ । अब देशमा गरिबको आन्दोलन शुरु हुन्छ । हामीले देश खोक्रो बनाउन पाउनै पर्छ । नत्र देशमा आएको लुटतन्त्रको के काम ?

हामीजस्ता गरिबको भलो नचाहने सरकार यो देशमा किन चाहियो ? आखिर यो देश कसले चलाइरहेको छ ? किन चलाइरहेको छ ? देशमा बसेर नि लुट्न नपाए के गर्ने ? काम गर्न सक्ने र सोझा जति त सबै गइसके विदेश ? अब हामीले किन रजाइँ नगर्ने ? गरिब-गरिब अब एक हौं । सरकार गरिबलाई न्याय दे ।






# प्रहरी र नेता

प्रज्वल घिमिरे

*एकथरि भन्छन्*
*यो देशमा महाशक्तिशाली*
*नोट हरिया*
*त्यै भएर समात्नुपर्छ*
*सुनकाण्डमा मात्र भरिया*
*अर्काथरि मात्र सत्यको संरक्षण गर्छन्*
*पऱ्यो भने देशकै लागि मर्छन्*
*एकथरि निर्मलाको हत्यारा लुकाउँछन्*
*अर्काथरि न्यायको अगाडि*
*मात्र शीर झुकाउँछन्*
*एकथरि सम्झेर भगवान्लाई*
*देखाउँछन् सधैं मानवता*
*अर्काथरि बनेर राक्षस*
*देखाउँछन् सधैं दानवता*
*एकथरिले पुऱ्याए अमेरिका*
*नेपालीलाई भुटानी बनाएर*
*अर्काथरि सफा छन्*
*कहिल्यै नगह्नाएर*
*एकथरि बचाउँछन् गल्ती गर्ने*
*आफ्नै पेसाकर्मी*
*अर्काथरि छोड्दैनन् दोषीलाई*
*नबनी अधर्मी*
*एकथरि आदेशमात्र मान्छन्*
*सित्तै पाए अलकत्रा पनि खान्छन्*
*अर्काथरि देशको रक्षा गर्छन्*
*नभनी घामपानी*
*नपुऱ्याई माटोलाई हानि*
*कति सुन्दर हुन्थ्यो हाम्रो मुलुक*
*एकथरिको कुबुद्धि गैदिए*
*अर्काथरि झैं स्वच्छ भैदिए ।*

# स्मार्ट फोन जिन्दावाद

शैलेन्द्र थापा

मानिस गाँस, बास र कपासबिना बाँच्न सक्दैन वा मानिसको अस्तित्व समाप्त हुन्छ । तर, समयअनुसार अब हामी गाँस, बास र कपासमा किन अल्झिने ? किन खानाका कालहरू भन्दै बस्ने ? अहँ नबस्ने ।

अब हामी यस्ता झीना, मसिना र सामान्य कुरामा किन भुल्ने ? खासमा गाँस, बास र कपास होइन अब त्यो छ नि के जाति हो ? मुबाइल, मोबायल, मोबाइल, स्मार्ट फोन, सेल फोन जे भने भन्नुस् योबिना हाम्रो अस्तित्व छैन भनेर मबाट आजैका मितिदेखि कामना मासिकमार्फत घोषणा गर्दछु । खासमा यो घोषणा ठूल्ठूला मिडिया बोलाएर पत्रकार सम्मेलन गरेर देश र विदेशमा लाइभ गर्दै गर्न पर्ने हो । तर, अहिले म यही मासिकमार्फत घोषणा गर्दछु । र, यो घोषणा मान्दिनँ, थाहा छैन, जानिनँ, बुझिनँ भन्न पाइँदैन भन्ने कडा आदेश पनि छ ।

अझै तपाईंलाई लागेन ? यो आदेश र घोषणा ठीक छ ? अहँ छ । शतप्रतिशत छ । स्मार्ट फोन बिना मानिसलाई हेप्पी बड्डे कसरी भन्ने ? सम्भव छ ? अहँ छैन, भेट्न जाऊँ पल्लो घरको मान्छे हो, के खुट्टा दुखाउनु ? नजाऊँ चर्को स्वरले झ्यालबाट भन्ने कुरा भएन । स्मार्ट फोन छ र त हेप्पी बड्डे भन्ने शुभकामना दिन पाइएको छ ।

बड्डे मात्रै हो र कसले बिहे गर्दछ हामीलाई बाल मतलब ? हेप्पी म्यारिड लाइफ भनिदियो बस् काम कुरो खतम् । अरे मेरो बिहेमा आइनस् भनोस् न मात्र हामीले जान्या छम्, तेत्रो शुभकामना दिएको डिजिटल्ली । जमना डिजिटलको जो छ । अर्कोतर्फ स्मार्ट फोन छ र त बेबी सावर हेर्न पाइया छ । नत्र यो अवसर कसरी पाउनु ? हुँदाहुँदा सात समुन्द्रपारि र यहाँ बसेर बिहे, व्रतबन्ध, पास्नी सबै भ्याइदिने हो डिजिटल्ली । अनि कसरी गाँस, बास र कपास ? गाँस, वास र कपास अनी स्मार्ट फोन । यो उठिलाई बनाउन यस सम्बन्धि ऐन, कानून निर्माण गर्न जरूरी भइसक्यो ।

उता कोही ब्यिो, यता शुरू भयो 'रिप' । अरे यार घाटसम्म जाने, परिवारजनलाई भेटेर सान्त्वना प्रदान किन गर्ने ? हामी पुरानो जमनाको मान्छे हो ? हामी कमेन्ट पनि लामो किन गर्ने ? हाम्लाई फुर्सद छ ? अहँ छैन । त्यसैले हामी अन्यन्त व्यस्त समयका बाबजुद पनि लेखिदिने हो २/४ अक्षर जस्तो आरआईपी, एचबीडी अनि हामी किन शुभबिहानी भनिरहन्छौं ? फुर्सद छ ? छैन, त्यति लेख्दासम्म उता कति ट्विट भए, कति टिकटक बने, कति फेसबुकमा फोटो अपलोड भए त्यसको चिन्ता कसले गर्छ ? त्यसैले ठोक्दिने हो जीएम, टीक्यू, टीकेएस आदि.... आदि । किन कि स्मार्ट फोन जिन्दावाद । स्मार्ट फोन छ र त हामी छौं भन्ने कुरा अब किन भनिरहनु पर्‍यो ? त्यस्तो जिनिस जसले पेजरलाई शहीद बनायो, घडीलाई कोमामा पुर्‍यायो, क्याल्कुलेटरलाई अचल बनायो, रेडियो कुन चराको नाम हो, सोध्ने बनायो, सीडीलाई फनफनी घुमायो, रेकर्डरले पानी पनि भन्न पाएन, क्यामरालाई आईसीयूमा पुर्‍यायो, कोडाक र कोनिका कुन्नि कता घुम्न गएका फर्केर आएनन् । अनि यति महत्वपूर्व जिनिस स्मार्ट फोनलाई जिन्दावाद नभने जीवन चल्छ ? अहँ चल्दैन । उता कोही विदेश जान लाग्यो ह्याभ अ सेफ फ्लाइट ठोक्दिने हो, उता कसले घर गाडीको फोटो पोस्ट्यायो, ओएमजी भन्दिने हो वा अमेजिङ भन्दिने हो । हामी भन्या आधुनिक मान्छे हुम् । त्यसैले पुरानो जमानामा के भयो बाल मतलब ? अझ बेला-बेला हामी भँडास र ताव कहाँ पोख्ने ? वातावरण नै छैन भन्ने बेला फेसबुक त छ नि, अनि हान्दिने हो । हाम्रो दिव्यवाणी ।

भान्सामा खाना पाको एक/दुई फोटो सञ्जालतिर नपोस्ट्याई खाए पेट खराब हुन सक्छ, खाना खान बस्यो २/४ सेल्फी नहाने गला लाग्छ, यस्तो अवस्थामा समस्यामा किन पर्ने ? पेट खराब किन बनाउने ? गला लाग्ने समस्या किन भोग्ने ? अहँ नभोग्ने किन कि स्मार्ट फोन छ । हामी त्यसको भरपुर उपभोग गर्ने हो । हामी कता घुम्न जान्छम्, के खान्छम्, कति बेला सुत्छम्, अफिस छम् कि घरमा, किन लुकाउने ? लुकाएर गोप्य राखेर के हुन्छ ? हामी छरपस्ट पार्ने हो । घरमा एक्लै छम् पनि भनेर पोस्ट्याउने हो । सुरक्षा हाम्लाई बाल मतलब ? स्मार्ट फोन जिन्दावाद । बूढीको बड्डे होस् कि कुनै सफलता, छोराछोरीको पढाइ होस् कि सफलता वा आमाको बड्डे होस् कि बा-आमाको म्यारिज एनिभर्सरी, घरमा मौखिक भन्ने उपहार दिने झन्झट किन गर्ने ? पुराना जमाना जस्तो किन हुने ? फेसबुकमा फोटो राख्ने हो हेप्पी बड्डे बूढी भन्ने हो, हाम्री आमाले फेसबुक चलाउन् कि नचलाउन्, बाले पनि ट्विटर चलाउन् कि बन्द गरून् हाम्लाई बाल मतलब ? मातातीर्थ औंशी होस् कि बाबुको मुख हेर्ने, सबै पोस्ट्याउने हो सञ्जालतिर । बा-आमालाई थाहा नभएर के हुन्छ ? केही हुन्न, तर यता डिजिटल भइन्न अनि डाइनोसर भइन्छ । त्यस्तो हुनु छैन हामीलाई । हाम्लाई फेसबुक हेर्दै भात नखाए रूचि हुन्न, बिहानै ट्वाइलेट जाँदा मोबाइल लगेन भने पहाड खस्न सक्छ, अनलाइनबाट एकछिन् अफलाइन भयो भने आकाश झर्न सक्छ । अनि यस्तो खतरा किन मोल्ने ? अहँ नमोल्ने । बरू स्मार्ट फोन नछोड्ने खतरा हुन्छ ।

त्यसैले स्मार्ट फोन छ र त हामी छौं, हाम्रो अस्तित्व छ । डाइनोसर कसरी लोप भयो थाहा छ ? के थाहा ? किन थाहा पाउने ! त्यो थाहा पाएर के हुन्छ ? थाहा पाउन जरूरी छैन । तर उहिल्यै सुनेको समयअनुसार चल्न सकेन र नयाँ वातावरणमा रमाउन सकेन रे । अनि हामी पनि डाईनोसर बन्ने ? कहाँ बन्न पाइन्छ ? हामी समय अनुसार चल्ने हो । शुभकामनादेखि दुःखसम्म सबै स्मार्ट फोनमार्फत गर्ने हो । आधुनिकता र समयअनुसार चल्ने हो । पछि हट्ने त कुरै छैन, अघि बढ्ने हो । टिकटक, फेसबुक, ट्विटर हाम्रो प्राण हो, धमनी हो, मुटु हो, कलेजो हो । बस् हाम्रो अंग जिन्दावाद यति भन्दा पनि तपाई मान्नुहुन्न भने म तपाईंलाई ठीक मान्दिनँ । समयअनुसार चल्नुस्, अघि बढ्नुस्, आरआईपी, टीक्यू, एचबीडी, जीएम, ओके, एनआईसीई आदि शब्दमा अभ्यस्त हुनूस् । यी हाम्रा प्राण हुन् । त्यसैले म भन्छु स्मार्ट फोन जिन्दावाद । तपाई पनि भन्नूस् स्मार्ट फोन जिन्दावाद ।







अच्युतमान सिंह प्रधान 'उत्सुक'
बालुवाटार, काठमाडौं

# सेटिङको चलखेल

चल्दछ यहाँ, जहाँतहीं नै सेटिङको चलखेल ।
राजनीतिमा हुन्छ, सेटिङको अति ठूलो चलखेल ।
चुनावमा टिकट पाउन पनि हुन्छ, सेटिङको चलखेल ।
उम्मेदारलाई जिताउन पनि हुन्छ, सेटिङको चलखेल ।
उम्मेदारलाई हराउन पनि हुन्छ, सेटिङको चलखेल ।
सरकार गठन गर्न पनि हुन्छ, सेटिङको चलखेल ।
अनि सरकार गिराउन पनि हुन्छ, सेटिङको चलखेल ।
सत्ता टिकाउन र गिराउन दुवैमा हुन्छ, सेटिङको चलखेल ।
देवी-देवताको पवित्र मन्दिरमा पनि हुन्छ, सेटिङको चलखेल ।
विमानस्थलबाट सामान छुटाउन हुन्छ, सेटिङको चलखेल ।
भन्सारबाट तस्करी सामान छुटाउन हुन्छ, सेटिङको चलखेल ।
अस्पतालमा पनि उपचारको नाममा हुन्छ, सेटिङको चलखेल ।
नेताको विदेश शयरमा हुन्छ, सेटिङको चलखेल ।
जागिर पाउन अनि जोगाउनलाई पनि हुन्छ, सेटिङको चलखेल ।
त्यति मात्र होइन सरुवा र बढुवाका लागि पनि हुन्छ, सेटिङको चलखेल ।
कुनै उद्योग व्यवसाय दर्ता अनि सञ्चालन गर्न हुन्छ, सेटिङको चलखेल ।
राजस्व छुट गर्नलाई हुन्छ, सेटिङको चलखेल ।
भष्ट्राचारीलाई छुटाउन हुन्छ, सेटिङको चलखेल ।
त्यति मात्र होइन मसानघाटमा समेत हुन्छ, सेटिङको चलखेल ।
हुंदा-हुंदा विदेशबाट काठको बाकस ल्याउँदासम्म हुन्छ, सेटिङको चलखेल ।
सेटिङको चलखेलबिना त यहाँ, हुंदैन केही पनि।
अब त मानिसको जन्म र मृत्युमा पनि हुन बेर छैन, सेटिङको चलखेल ।





















भाग बैरे भाग.. आउँदैछन !!







सावधानी हट्यो....













मोबेरीया

















राजु नेपाल





















प्रतिभा तिवारी









# चाउचाउप्रेमी छोरा

मिस्टर ह्यान्डसम

ओहो ! मेरो गोलमोल छोरा । हाम्रो गौरवको ताज बन्छस् कि भनेको त जोकर पो भइस् । टूपीएम लालीसँग तारा रमपम गाउँदै पो हिंडिरहेको छस् । बिहानबेलुकी प्रीति र रूचिमा आफ्नो चाख देखाउँछस् रे । मगमग बास्ना आउने लड्कीहरू र तरूनीसँग रारातिर घुम्न जान्छस् रे । बेला न कुबेला उनीहरू सँगसँगै हुर्रे भनी मितेरी गाँसी दौंतरी बनाउँदै हिंडेर हामीलाई बिर्सने पो होस् कि ?

हेर, तैंले आफैंलाई कृष सम्झेको छस् कि क्या हो । हेर बाबु अहिले तलाई जो-जोले हाई-हाई गर्दै वाई-वाई खुवाउनु खुवाएका छन् नि । तिनीहरूले पछि बाई-बाईसमेत गर्न पछि हट्दैनन् । अनि करेन्ट लगाएर बोनसमा लेकाली सोल्टीहरूले रम्बाले फटाफट भाटा, लाठीचार्ज गर्लान् । अनि चाल पाउलास् । त्यस कारण बेलैमा आफ्नो बानी सुधारेर सतर्क हुनु है हाम्रो प्यारो बाबु छोरा ।

# छोरोले गाली खान्छ

शान्ता भण्डारी

धेरै मोबाइल चलाएर
काम नगरेर
भनेको नमानेर
दिउँसो धेरै सुतेर
अल्छी भएर
खाएको थालमै चुठेर
काम जति बहिनीलाई लगाएर
आफ्नो लुगा नधोएर
काम गर्न सक्दिनँ भनेर
कामको नाउँमा सिनको नभाँचेर
तोरी र कोदो नचिनेर
मरिच र टिमुर नचिनेर
संस्कारी बुहारी खोजेर
हजुरबाको कमाइ खाएर
गाँजा, चुरोट तानेर
चिउराको बोट कस्तो हुन्छ सोधेर
तरूनीतिर आँखा लाएर





# जोकर जुका





माधव पोखरेल 'गोज्याङ्ग्रो'

जुकाहरु मातिन पनि कति मातिएका । मानव शरीरमा बित्ते नापो नाप्दै कहाँ-कहाँ नाप्छ-नाप्छ । देखाउने ठाउँदेखि लुकाउने ठाउँसम्म आफूखुसी नाप्न पुग्छ ।

अर्का शरीरमा बिनाअनुमति नाप लिन तम्सिने यो जुकाको नाक काटौं भने नाक नै हुँदैन । नाक भएको भए मेरो नाक छ भनेर अर्काको शरीरमा पसेर उपद्रो मचाउने हर्कत गर्न सक्दैनथ्यो होला । बिनाअनुमति अर्काको शरीरमा मनपरी तरिकाले यात्रा गर्ने जुकालाई जीवनभरि यादगार हुने गरी ठिङ्गुरामा हाल्नुपर्ने भए पनि सरकारले यस्तालाई छाडा छाडेको छ । गर्न पनि अतिचार नै गर्छन् यी जुका । कहिले शरीरको लुकेको अङ्गमा त कहिले झुकेको अङ्गमा कहिले सुतेको अङ्गमा त कहिले उठेको अङ्गमा पुगेर चुम्मा खान्छ । लाजशरम नभएको नकचरो जुकाको नाकमा अर्को जोकर जुकाले बिस्ट्याइदिए पनि हुन्थ्यो । किनभने एउटा जुकालाई अर्को जुकाले चर्को स्वरले गर्जिंदा र नाकमा बिस्ट्याउँदा जुकाको जोक गर्ने शैलीले इज्जत जान्छ । नाक नहुने जुका जहाँ पायो त्यही ताक्छ र मनमौजी गर्छ ।

अरुभन्दा पनि सुन चुस्ने जुकाहरु यति सलबलाएका छन् कि देशका गौंडा-गौंडामा जमेका छन् । त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा समेत यी जुकाको बाहुल्यता बढ्दै गएको छ । विमानस्थलमा कतिपय जुका पहेला सेता, राता भएर देखापर्नुका कारण पनि अहिले आएर छर्लंग भएको छ । दिनहुँजसो रङ फेर्ने जुकाहरु फेरि सरकारसँग जुका टाँसिएझैं गरी लिपिक्क भएर टाँसिन्छन् । सुन चुस्ने जुकाको दोकान हुन्छ रे भनेको सुनेका हुँ, तर दोकान नहुने जुकाले पनि सुन चुसेको कथा व्यथा सुनेको छु । आखिरी जुकाले सुन चुसे पनि मान्छेको रगत वा कुनै जनावरको रगत चुसे पनि त्यो जुका नै हो । गन्ध सुंघ्दै बित्तो नाप्दै गएर सुन चुस्ने जुकाको वंशनाश हुने गरी लहरोको जरो नै नकाटी नहुने अवस्था आएको छ । तर, यहाँ सुन चुस्ने जुकालाई अंश लाउँदा जुकाहरूले वंशवृद्धि गर्ने अवसर पाएका छन् । यो सबै काम टुप्पोबाट हुँदै हुँदै फेदसम्म पुगेको छ । जुका नै टुप्पोमा विराजमान भई बसेर चुस्न पल्केको छ भने फेदमा बस्ने जुकाले त झन् टुप्पोकै सिको सिकेर र इशारामा चलेर चुस्नुसम्म चुसेको छ ।

जोकरका रूपमा देखापरेका सरकारी र गैरसरकारी जुका बेलामौकामा छक्का दाउ हानेर आफैं छक्क पर्छन् । चौका दाउ हान्दा छक्का दाउ पल्टिन्छ र चुसेको रगत सबै छाड्नुपर्छ । भनौं जोकरका रूपमा देखापरेका जुकाले सायद आमाको गर्भमा छँदैदेखि जुका बन्न पाउँ भनेर जुकेश्वर महादेवको पूजा-आराधना गरेका थिए होलान् । यो कुराचाहिं मलाई पनि विश्वास लाग्न सक्छ । किनभने जुकाको आमाले गर्भधारण गरेदेखि नै जुकाले धेरै धन-सम्पत्ति कमाओस्, दुनियाँ रूवाउन सकोस्, दुनियाँलाई चुसेर भुंडी फुलाएर हिंड्न सकोस्, दुनियाँलाई हसाएर जीवन निर्वाह होस् भनेर जुकेश्वर महादेवसँग फल मागेकी थिइन् क्यार ! र त अहिले दुनियाँका अगाडि फुलेलम् भएर हँसाउँदै चुस्दै हिंडेका छन् जोकरझैं भएर ।

फेरि यी जोकर जुकाहरु कोही परालको त्यान्द्रो जस्ता छन् । कोही भने फुलेर अरिमट्ट छन् । कोही जति चुसे पनि कहिल्यै नअघाउने गुन्द्रुकझैं छन् । कोही जति चुसे पनि कहिल्यै चुस्न नपाएका जस्ता देखिन्छन् । कोही असन्तोषका भकारी, कोही शिकारीमाथि शिकारी भएका छन् । कोही चुस्दा चुस्दा आफ्नै पीरले पिरोलिएका छन् । कोही आफन्तलाई चुसेर घेरिएका छन् । कोही समाजको जालोमा जेलिएका छन् । जुकाहरु भनौं समाजभित्र मात्र होइन कि देशका प्रत्येक कुनाकाप्चामा टाँसिएर अर्थतन्त्र, योजना आयोजना लगायतका धेरै क्षेत्र चुसिरहेका छन् ।

# भावीलाई निवेदन

युश देउजा

श्रीमान् कर्म लेख्ने भावीज्यू
आकाशलोक, गणस्थान
ऊ जुनी, विश्वबर्माण्ड

विषय : कर्म सच्चाई पाउँ

महोदय,

उपर्युक्त सम्बन्धमा म जन्मेको छैठौं दिन मलाई सुख-दु:ख बराबरी होस्, पढ्न मन लागोस् ।

धेरै धन कमाएर सबैको मान्यागुन्या भइयोस् । हिन्दा ठेस नलागोस् बस्दा केश नझरोस् । चिरञ्जीवी भइयोस्, सबैको अगाडि हाँसीखुसी रहन पाइयोस् । रून कहिल्यै नपरोस्, भनी लेख्नुपर्नेमा अन्यथा भई दु:खैदु:ख भयो ।

किताब समात्नै मन लाग्दैन । परीक्षा आउँदा फिटिँकै पढ्न मन लाग्दैन । लोकसेवा पनि पास गर्न सकिनँ। सरकारी जागिर पनि पाइएन । जीवनमा ऋण नै ऋण लाग्यो । सबैले हेप्न थाले । काम गर्न जाँगर नै चलेन । काठाडौंमा घर-घरेडी जोड्न सकिन । त्यस कारण मलाई जाँगर चल्ने, धन कमाउने, सुख पाउन सक्ने काठमाडौंमा घर-घेरेडी जोड्न सक्नेलगायतका प्रावधानहरू राखी कर्मसाथ भाग्य पनि सचाई दिनुहुन अनुरोधसाथ निवेदन गर्दछु ।

-निवेदक

उही त हो नि- अल्छी मूर्ख मनुष्य
खानाको काल, पृथ्वीको भार
बाजे-पुड्के माइलो
बाबु-धोजे माइलो



# टाउको खाने व्यथा



जीएस बाबु 'उदयपुरे कान्छा'

गाउँखाने कथा धेरै सुन्नुभयो होला, आज म तपाईंहरूलाई टाउको खाने व्यथा सुनाउँछु । पढ्न मन लागे पढ्नुहोला, मन नलागे धरहरा चढ्नुहोला । सिसाको टावर भनेर स्काई टावर चढ्न जाँदा फेरि लड्नुहोला । ल अब अघि बढ्नुहोला ।

आजकल हामी व्यंग्यकारहरूको धन्दा मन्दा परेको छ । कहिले झण्डा, कहिले डन्डा बोकेर हिंड्ने नेताहरूले वर्षमा बाह्रैमासा गाईजात्रा देखाउन थालेपछि व्यंग्यलाई नै बाङ्गाले हानेर ठाउँकाठाउँ भुतुक्कै पारेका छन् । नेपालमा भएजति सबै गाउँखाने कथा मात्रै नभई हिंदुस्तानको पहेलीका किताब पनि रातभरि रटेर भोलिपल्ट भाषण गर्न जाँदा रछन् । जति हँसाउन सक्यो, उति सफल नेता भन्ने ठानेर भातका सट्टा हास्य र व्यंग्य नै खाँदा रछन् । व्यंग्यलाई बेचेर भात खान गाह्रो भो हजुर, त्यही भएर धेरै हास्य व्यंग्यकारले संन्यास लिइसके । आफ्नो काम पनि तिनै नेतालाई दिइसके । हरिओम तत्सत् भनेर बाँच्न सकिएला कि भन्दै पहेंला झोली सिइसके ।

भिक्षा मागेर खान पनि आजकल त गाह्रो छ हजुर । बालेनका बाहुबली सेना आएर कति बेला करङका पाता भाँचिने गरी भाटाले दिने हुन् भन्ने डर छ । आफ्नो त फेरि खोला किनारमा घर छ । बागमती खोलो कहिले यता सर्छ, कहिले उता पर्छ ।

काठमाडौंमा काम पाइन्छ कि भनेर गाउँबाट आएँ । कहिले यता धाएँ, कहिले उता धाएँ । नेताका पाउ समाएँ । विक्रम टेम्पोको खलासीको काम पाएँ । बानेश्वर-रतनपारक भन्दै सपनामा पनि गीत गाएँ । ८ जना मान्छे बोक्थ्यो । खाँदखुँद पारेर १५ जनासम्म हाल्थ्यौं । ड्राइभर आफैं मालिक, दुवै भाइको पेट पाल्थ्यौं । दार्जेलिङको रेलले जस्तै धूँवा फाल्थ्यो तर सस्तो यात्रा धेरैलाई पाल्थ्यो । वायु प्रदूषण भन्दै विक्रम टेम्पो खेदाए । टेम्पोसँगै तराई झरेर साहुले ज्यान बचाए । म परे बुँगो, बस्ने खाने के टुंगो ?

बल्लतल्ल डानस रेस्टुरेन्टमा बाउन्सरको काम पाएँ । त्यो बेलामा क्याबिन र डान्स रेस्टुरेन्ट थियो खुब चलेको । पैसावालहरूले गर्दा धपक्कै बलेको । रात परेपछि धन्धा अर्कै चल्थ्यो, डिस्कोथेकको कुनामा रातो बत्ती बल्थ्यो । भुँडीवाल-दाह्रीवालहरूले पैसाको गड्डी च्यातेर फाँक्थे । हामीले टिप्स कहाँ पाउनु ? त्यही न्याँक्थे । रेस्टुरेन्टमा छाडुन्जेल रक्सी खान्थे, डान्सरहरूलाई आफ्नो गाडीमा लान्थे ।

बाउन्सर भने पनि खासमा गार्डको काम लगाए । स्यालुट हान्न मैले त्यहीं सिकेको हजुर । टिल्ल भएर डान्सर चेपेका साबहरूलाई सलाम ठोक्यो, हजार-पाँच सय बक्सिस् पाइन्थ्यो । तिनको बिलबाट हाम्ले नि खाइन्थ्यो । एक दिन मारबाडी भुंडे साबले त सिक्री नै फुकालेर दिए हजुर । साहुले थाह पाउँछन् भनेर बिरालोले आची लुकाएझैं लुकाएँ । आफ्नी रामप्यारीलाई दिउँला, सँगै जिउँला भनेथें । रामप्यारी नै बेपत्ता भई हजुर । खासमा उसको नाम पनि रामप्यारी होइन रहेछ । मोरीले सबै कुरा ढाँटेकी रहिछ । अस्ति अस्पतालमा नयाँ के भन्छ अरेइभी कि के जातिको अग्लो-अग्लो यासयुभी गाडीबाट सेतो कुकुर डोर्‍याउँदै उत्रेको देखेको थिएँ । सोध्ने, बोलाउने हिम्मत पो आएन ।

धत् किन रूनु भाको । हास्यव्यंग्य लेख्नु भनेको पिरेम कथामा पो लगेछु । झन्डै पाठकवृन्दलाई ठगेछु । हुन त देशमा सबैले ठग्छन् । नेपाललाई सिंगापुर बनाइदिउँला, रातारात धनी बनाइदिउँला भनेर बाबुराम र प्रचन्डले ठगे । घर-घरमै ग्यास, नेपालभरि चुच्चेरेल, खोलैखोलामा पानीजहाज भनेर ओलीले ठगे । कांग्रेसका त नकुरा गरम् नठगेको पो केमा छ र ?

माओवादीभन्दा सम्झें । जसासुकै माओवादी आक्रमण बढेपछि डान्स रेस्टुरेन्टहरु प्रहरी-प्रशासनले बन्द गरिदियो । क्याबिन र डान्स रेस्टुराँमा काम गर्ने हजारौं केटीहरु कहाँ गए । धेरै निधिखोजी नगरौं । फेरि माइतीघरमा झुत्रे व्यंग्यकार मुर्ताबात्, यू नो आई नो जिन्ताबात् भन्दै नारा लाग्न थाल्छ । नारा भनेपछि सम्झें । त्यसपछि बन्दका यामहरु शुरु भए । बन्दमा मान्छे जुटाउने, ढुंगा हान्ने ठेक्का पाएँ । त्यो बेलामा खुब कमाएँ । मौकैमा बागमती किनारमा घरजम पनि जमाएँ । काम सजिलो थियो हजुर जुन पार्टीको र्‍याली, जुलुस भन्छन् । टाउको गन्ती पैसा उठायो । नारा लगाउने, झण्डा र डन्डा बोक्नेहरूलाई दिनको एक/डेढ से दियो । बाँकी आफूलाई ।

यो धन्धा खुब फाप्यो हजुर । सबै राजनीतिक दलका नेतासँग मैले भातमात्रै होइन, रक्सी पनि खाएको छु । सबैसँग खिचेका फोटा छन्, नपत्याए मेरो फेसबुक पेजमा गएर हेर्नुस् ।

हरेक चिजको याम हुने रहेछ । बन्द, पार्टीका सम्मेलन, नारा-जुलुसको काम पाउन छाड्यो । त्यसपछि फुटपाथको व्यापार थालें । महाबौद्धबाट माल उठाउने फुटपाथ व्यापारीलाई होलसेलमा दिने, बीचको कमिसन आफू लिने । व्यापार राम्रै चल्दै थियो । कहाँबाट यो बालेन भन्ने मान्छे के बालेर आए-आए । फुटपाथको व्यापार खर्लप्पै खाए । सबै फुटपाथे व्यापारीको त्राहिमाम् छ, जतासुकै जाम छ । सुकिलामुकिला भन्छन्- बालेनलाई सलाम छ । तर, आजकल शहरमा खानलाई फलाम छ ।

एक दिन रत्नपारकको रेलिङमा अडिएर एफएम सुन्दै थें । पुलिसको भ्यान आएर टक्क अडियो । मान्छेको भीड मतिरै मोडियो । उदयपुरे कान्छो भनेको तिमी नै हौ ? हो, हजुर ।

साब सुन तस्करको मालिक भेटियो भन्दै पुलिसहरूले घेरी त गए ।

गेडसेट गेडी कम्पनी तिम्रो हो ?

हैन हजुर । म त ज्याला मजदुरी गरेर खान्छु भन्दाभन्दै समाति त हाले ।

सुन्दै छु, मेरा नाममा गेडसेट गेडी कम्पनी खोलेर हङकङबाट ९ सय किलो सुन ल्याए अरे, त्यसमध्ये १ सय किलो सुन समातियो अरे ।

मेरो नाममा कसले कम्पनी खोल्यो होला ? जागिरमा राख्दा नागरिकता लिएको डान्स रेस्टुरेन्टको मालिकले ? सामान उधारो लिंदा धरौटीबापत नागरिकता लिएको महाबौद्धको साहूले कि बन्दकर्ता, जुलुसे कार्यकर्ता सप्लाई गर्दा हिमचिम भएका कुनै नेताले ? मेरो टाउको यही प्रश्नले खाइरहेको छ, अब तपाईंको नि ?




































# कसको खाना के !


शिवराम तिमिल्सिना


काजु खाने – ऋषि धमला
कागज खाने – बालकृष्ण खाँड
तार खाने – जनार्दन शर्मा
ललिता निवास खाने – विजय गच्छदारसमेत
बाखा खाने – गगन थापा
बजेट खाने – सुब्बा
लडाकूको पैसा खाने – प्रचण्ड
धूलो-धूवाँखाने – ट्राफिक
राशनभत्ता खाने –हाकिम
मण्डी खाने – जर्नेल
बाटोमा चाउचाउ खाने – आर्मी, पुलिस
कसम खाने – आरजु राणा
बियर खाने – टोपबहादुर रायमाझी
धोका खाने – नेपाली जनता

## वास्तविकता


सन्देशबाबु भुजेल, डुचिढुंगे पाटी, भक्तपुर


ठूल्ठूलो घर छ – परिवार छैन
धेरै पढाइ छ – व्यहोरा छैन
औषधि महँगो छ – स्वास्थ्य छैन
आम्दानी धेरै छ – मनमा शान्ति छैन
बौद्धिकस्तर राम्रो छ – भावना छैन
ज्ञान राम्रो छ – दिमागै छैन
प्रेम सम्बन्ध धेरै – साँचो प्रेम छैन
फेसबुकमा साथी धेरै – घनिष्टता छैन
खोला धेरै छन् – पानी नै छैन
शहरमा मान्छे धेरै – मानवता छैन
आफन्त धेरै छन् – सहयोगै छैन
घडी धेरैसँग छ – समय कसैसँग छैन
इच्छा धेरै नै छ – पूरा हुन सक्या छैन
काम गर्ने इच्छा छ – वातावरण नै छैन
सामान धेरै छ – तर, टिकाउ नै छैन
सन्तान धेरै छन् – सुख नै छैन
ज्वाइँ धेरै छन् – हेर्ने कोही छैन
























# योग्यता

**पुनम जोशी**

*अहिलेसम्म ऐना नहेरेको मान्छे*
*अहिलेसम्म झुटो नबोलेको मान्छे*

*अहिलेसम्म गल्ती नगरेको मान्छे*
*अहिलेसम्म केही नचोरेको मान्छे*

*अहिलेसम्म पटक्कै नरिसाएको मान्छे*
*अहिलेसम्म कहिले पनि नरोएको मान्छे*

*अहिलेसम्म कहिले नहाँसेकै मान्छे*
*अहिलेसम्म हाच्छिऊँ नगरेको मान्छे*

*अहिलेसम्म आँखा नतरेको मान्छे*
*अहिलेसम्म झिंगा नधपाएको मान्छे*

*अहिलेसम्म टर्रो कुरा नगरेको मान्छे*
*अहिलेसम्म हिंड्दा नलडेको मान्छे*

*अहिलेसम्म गाली नखाएको मान्छे*
*अहिलेसम्म कसैलाई नहप्काएको मान्छे*

*अहिलेसम्म केही नहारेको मान्छे*
*अहिलेसम्म बाटोमा नदौडेको मान्छे*
*छ त कसैमा यस्तो योग्यता ?*

# बेरोजगारी

**शारदा भुजेल**, पिखेल, भक्तपुर

एक बेरोजगारी छ
बडो परिश्रमले कमाएको पैसा
सुर्ती, पराग किन्छ मुखमा हाल्छ र थुक्छ
अर्को दोस्रो बेरोजगारी छ
नेपाल सरकारको गरिबी निवारण
कार्यक्रम थाहा पाउँछ र
आफू त्यो वर्गमा नपरेकाले थुक्क थुक्छ
तेस्रो बेरोजगारी डिग्री होल्डर छ
बेकार पढेछु भन्दै भाग्यलाई धिक्काछ
चौथो बेरोजगारी छ
ऊ जग्गा-जमिन बाँझो राख्छ
खाद्यान्न, तरकारी महँगो भयो भन्छ
बाबुबाजेलाई जग्गा राम्रो ठाउँमा
किन नकिनेको भन्दै हकार्दै हिंड्छ
पाँचौं बेरोजगारीको हातमा पासपोर्ट छ
ऊ विदेश जाने लाइनमा उभिएको छ
जहाज चढ्दै गर्दा जन्मभूमि हेर्छ
सबैलाई सकुशल बस्नु है भन्छ
पाँच वर्षमा फर्कन्छु फर्कन्न, म त हिंडे है
बाई, बाई नेपाल भन्छ, जहाजभित्र चढ्छ ।

# भगवान्को याद कहिले आउँछ !

**सरू देउरानी**

धर्मात्मालाई हरेक समय
पापीलाई मृत्युको समय

चोरलाई पक्राउ पर्दाको समय
धनीलाई बिरामी हुंदाको समय

कन्जुसलाई पैसा हराउँदाको समय
व्यापारीलाई घाटा हुंदाको समय

राजनीतिज्ञलाई चुनाव हार्दाको समय
विद्यार्थीलाई चिट चोर्दाको समय

अफिसरलाई घूससहित पक्राउ परेको समय
कर्मचारीलाई खाली हात हुन्छु कि भन्ने समय

यात्रीलाई बस-रेल छुट्दाखेरिको समय
बुढेसकालमा एक्लै हुन्छु कि भन्ने समय



घाटा छ... ..घाटा छ ! बजारमा घाटा छ।
नेपाल आयल निगम




सर ! यो त जोक होइन नि ! यो त हाम्रै मन्त्रालयको प्रतिवेदन हो नि !




बाबा हजुर ! कस्तो देखियो...
सेयर बजार जस्तो...




...बा तपाई कुन शरणार्थीको नेता हो ।
नेपालीलाई भुटानी शरणार्थी बनाउने धन्दामा नेता




...बाबु म कुबेर होइन...कुबेर नयाँ रेकर्ड हुँ!




BANK
'हामीले' ...पनि नाफा कमायौं !
बैंक




यो हरियो पासपोर्टले मात्र कहाँ उड्न पाइन्छ ? अध्यागमन पास हुनलाई नोट चाहिन्छ नोट...
अध्यागमन




यो त अन्तर्राष्ट्रिय विमानस्थल हो नि यहाँ हजारमा हैन / लाखमा काम हुन्छ... ...लाखमा... !




अनि, घाटा भो... घाटा भो... भनेर मलाई गाली गरेर हुन्छ ?




मैंले लुटेको हैन थापेको हो । हिजो नाङ्लो थाप्थें ...आज जग्गा !
ललिता निवास






खेलाओ केटा हो, तिमीहरूकै दिन छ !
ब्याजदर




संविधानको व्यवस्था अनुसार हैन । यो कर अधिकृतको व्यवस्थामा भएको हो।
कर
कर




व्यापारी कालोसुचीमा... बैंक नाफामा...
कालोसुची
बैंक




गह्रौं छ त, गन्तव्यमा पुग्न सकिन्न कि क्या हो!
राजस्व संकलन




अब त म गणतन्त्रको राष्ट्रपति भइसके नि...
जाम गरेर देखाउनु भो त ?




रातो कार्पेट रे ? त्यतिको कमाइ भएको मान्छे आफैं ओछ्याउन सकिहाल्छन् नि !




कर हो क्या कर, कति करकर गरेको !



# भैंसीलाई हेप्ने ! डिस हान्ने !!

**सतीशकुमार भुजेल**
इन्द्रको खोल्सा, भक्तपुर

हिजो भैंसी रिसायो दूध पनि दिएन। किन नदिएको भनेर सोधें। उसले भन्यो -हजुरहरूको बच्चाले अलि ठूलो भएपछि भैंसी कै दूध पिएर हुर्कन्छ। डाकटर इन्जिनियर, वकिल, पाईलट बन्छ। अनि स्कूलमा चाई निवन्ध गाईको लेखिन्छ।

लक्ष्मीपूजामा तिहारमा पनि गाइको पूजा गरिन्छ। लिपपोत पनि गाइकै गोबरले गर्ने। हामीलाइ चांहि गन्दै नगन्ने अनि अरू कसैले नपडेपनि कालो अक्षर भैंसी बराबर भनि हामीलाइ नै गालि पो गर्ने। कुन चाहिं चार खुट्टे जनावरलाइ मान्छे ले पढाएका छन् र? तिमीहरूका सन्तानले नपडे पनि कालो अक्षर भैंसी बराबर भनि हामीलाइ नै गालि पो गर्ने। अनि जनैपूर्णिमाको भोलिपल्ट पनि गाइकै मात्रै जात्रा मनाउने। जतातती गाइकै चर्चा परिचर्चा गरेर रमाइलो गर्ने। हामीलाई एक रौं बराबर पनि नगन्ने। हामीलाई गालि गरेर गाइको पूजा गर्ने। हामीहरूले तिम्रो सन्तानको के चाहि बिगारेका छौं, हं। हाम्रै साथी गाइको गहुँत र गोबर चोखो र पवित्र हुने रहेछ। हाम्रै चांहि मल मात्रै हुने रे। हामीमाथि कत्तिको अन्याय मान्छे हरूको।

नेपाली पाठ्ठयपुस्तकमा पनि कबाट कछुवा खबाट खरायो, गबाट गाई गोडे ग र भ बाट भैसी भन्देको भए कसको के जान्थ्यो र । हामीलाइ हेप्नि? डिस हान्नी? कसैले छोराको बिहे गरेर बुहारी ल्याएको छ भने गाईजस्ती सोभ्मी रे, मोटी भै भने चाहिं भैंसी जस्ती मोटी रे ।

हाम्रो भैंसीको जात ाई कति सम्म हेपेको ह? आउँदा वर्षदेखि भैंसी जात्रा पनी मनाऔं। भैंसीको पनि पूजा अर्चनाका साथ चाडवाड मनाउने गरौं। नेपाली पाठ्यपुस्तकमा भैंसी को जीवनी पनि पढाउने गरौं ।






















शेषराज भट्टराई
शिवशक्तिमार्ग, फूलबारी-११,
पोखरा, कास्की

# लड्डु संस्कार



लड्डु कस्तो आकार प्रकार र रूप रङ्गको कस्तो ढङ्गको हुन्छ भन्ने कुरा मान्छेको के कुरा, मुसालाई पनि थाहा हुन्छ । अतीब स्वादको धनी लड्डु मनी हुने जो पनि हुरूक्क हुन्छन् र लड्डु पाएपछि फुरुक्क पनि त्यस्तै । लम्बोदर, एकदन्त, सिद्धि विनायक, बक्रतुण्ड, महाकाय, गजानन प्रभुको अति प्रिय खुराक लड्डु मान्छेका जातले पनि हातै थापेर मर्क्याउन थालेका छन् । देश-विदेशमा अविष्कार होस् त लड्डु जस्तो दुनियाँ मन्त्रमुग्ध भएर यसैमा फिँगाफैं भुम्मिराखून् । कस्तो काइदाको लड्डु । त्यसैले पो भन्दा रहेछन् सुरूचिपूर्ण काम बन्यो कि दुवै हातमा लड्डु । एक हातमा लड्डु पर्दा त मख्ख परिन्छ भने दुवै हातमा लड्डु भएपछि देह प्रफुल्ल नहुने कुरै हुंदैन, अनि त खुसीले हड्डी पनि हाँस्न थाल्छ ।

मनको लड्डु घिउसँग खानु भन्ने भनाइले जे-जस्तो अर्थ लाए पनि निख्लो लड्डु उद्यम मीठो हुने हुनाले खाएपछि कुदुम-कुदुम लाग्छ । लड्डु निल्नलाई अचार, चट्नी, दाल, दूध, दही, तरकारी, घिउ, साग, केही चाहिंदैन, आफैं सुलुसुलु जान्छ र पेट र जिब्रोले आनन्द मान्छ । सिंगो गोलो लड्डु टपक्क टिप्यो, मुख वायो कपक्क खायो । कस्तो काइदा । जति कोचाऱ्यो उति मीठो, मन, मुटु, जिब्रो, तिघ्रो, जतासुकै छाप छोड्न सफल लड्डु देखेपछि सासले तानेर खाउँजस्तो आस लाग्छ । यति मिष्ठान्न तत्व मान्छेले मात्रै किन हसुर्ने भनेर भगवान्लाई सम्फिएका हुन् कि भन्ने शंका नि उत्तिकै प्रबल छ ।

हरेक उत्सव महोत्सवमा बैंकबाट कर्जाजन गरेर भए पनि लड्डु खाइदेर खुसीयाली मनाउने चलन धनवान्को हो कि तन्नम भगतको ? धनवान्बाट नै मालिक रिभाउन यस्तो कृत्यको प्रादुर्भाव भएको हो भनेर ठोकुवा गर्न सकिन्छ । गरिबको त जिन्दगी जिउन आलु, मसेउरा नै मिष्ठान्न लड्डु । यस्तो लड्डु भातसँग मुछेर उदरस्थ गर्दा प्राण रहन्छ तरान आउँछ तर गुलिया महँगा लड्डुले न छाक टर्छ न तिउन तरकारीको गर्जो टर्छ न पेट भर्छ सिंगो जिब्रोलाई मात्रै मीठो बनाएर के गर्छ ? तै पनि सज्जन, दुर्जन एकछत्र धनी, गरिब, कर्मचारी, व्यापारी, विद्यार्थी, बाबु, आमा, छोरा छोरी, माइती मावली, हरेक खुसीयालीको अन्तिम निष्कर्ष लड्डु । साँच्चै लड्डु भड्डुमा पकाउँछन् कि बढेमानको ढड्डु, रूखमा फल्छ ? कसरी पुऱ्याउन सकेका हुन् दुनियाँलाई ? हरेकको हातमा लड्डु गोजीमा लड्डु, भोलामा लड्डु, पोल्टामा लड्डु, ओछ्यानमा लड्डु, सिरानीमा लड्डु दायाँ लड्डु, बायाँ लड्डु के लड्डु नखाई नखुवाइ कुनै काम पनि फत्ते हुंदैन ? लड्डुको लतमा पर्दा मर्दा पनि लड्डु बाड्न बेर छैन । यी लड्डुका लतीहरूले । यस्तो अवस्थामा लड्डु बाड्यो भने आफ्नै तालुमा लड्डु फलाइ दिन्छन् । त्यसैले त लड्डु खुसीयालीमा मात्रै मुस्कुराउँछ । रोदन क्रन्दनमा लड्डु न हिजो बाडिएको थियो न आज ।

देवाधिदेव महादेवका पुत्ररत्न गणेश भगवान्लाई असाध्यै मन पर्ने लड्डु उनैको रूचिका कारण हामी प्रसन्नताका साथ भोग गर्ने गर्छौं । मनोकामना सिद्ध, पेटभरि गलगिद्ध भएपछि लड्डुमा राइँदाइँ गर्ने मीठो बाहना हामीले अज्माएका छौं जुन पुस्तान्तरण गर्दै गएमा नै यसको जरोकिलो अझै मजबुत बन्दै जान्छ । हामी मीठो लड्डुको स्वादमा हामी मीठो लड्डुको स्वादमा लट्ठ परेर हुस्सु हरामी बेसरमी बनि रहेका छौं । पोइला गएकी श्रीमती फर्किंदा पनि लड्डु खरिद गरेर टोलभरि ढोल पिट्दै अरूका मुखमा कोच्याउँदै आफूले पनि बुजो हाल्ने गर्छौं । देख्दै लोभलाग्दो लड्डु संस्कारले सनातनी हिन्दूहरूको मन, मुटु र मुखमा एकछत्र राज गरेको छ । हाम्रा सन्तान दरसन्तान यसैमा मक्ख छन् । क्रिस्चियन, मुस्लिमका शक्तिशाली देशमा उत्पात खुसीले हड्डी नै हाँसे पनि प्रिय मिष्ठान्न लड्डुलाई चटक्कै बिर्सदा कटक्कै मन खान्छ । कति कर्कष र कठोर छ त्यो मन मुटु जसले हरेक हर्षमा बाँडिने, आतिथ्यताको प्रमुख अस्त्र लड्डुलाई बहिष्कार गर्छ, कटक्क मनखाने गरी चटक्क बिर्सिन्छ । निष्ठुरी माया । बैगुनी माया । गणेशको मिष्ठान्न खुराक नखाने खुसीयालीमा ऱ्यालीमा वितरण नगर्ने ती माया मान्छे नै हुन् र ? विश्वासै लाग्दैन ।

घरमा वंश धान्ने हंशको उत्तराधिकारी भनेको मान्ने, शत्रुलाई ढुंगाले हान्ने, सुन्ने, जान्ने, या तठेब्रो, लाटो नै भए पनि छोरो मोरो जन्मियो भने ससुरालीले दिएको औंठी धितो राखेर भए पनि मीठो लड्डु खानैपर्ने कस्तो काइदाको बाहना । सन्तानले जाँगर चलाएर नाम चलाए भने पनि लड्डुको वर्षा गराउनै पर्ने । सधैं बढी राख्ने उमेर थपिए पनि लड्डु किन्न हिंड्नै पर्ने । अभावको परिपूरक नोकरी मिले पनि लड्डुसँग मुख मिलाउनै पर्ने । अस्पतालबाट पाताल लोक जानुपरेन भने पनि ठल्लो लड्डुको पछि लाग्नै पर्ने । अप्रेसन सफल भए पनि लड्डुमा हात हाल्दै पर्ने । भन्सारबाट माल छुटे पनि माइतबाट दाल छुटे पनि लड्डु । शिरबाट बाल छुटे पनि लड्डु तासको खाल छुटे पनि लड्डु । मृत्युको मुखबाट काल छुटे पनि लड्डु । शाली पाए पनि लड्डु, बिनाअर्थ ताली पाए पनि लड्डु । हलोको फाली पाए पनि लड्डु, माछा मार्ने जाली पाए पनि लड्डु, शत्रुले गाली पाए पनि लड्डु, फूल गोड्ने माली पाए पनि लड्डु । पिनास निको भए पनि लड्डु, विनाश साम्य भए पनि लड्डु, बाहिर गए पनि लड्डु भित्र आए पनि लड्डु । हर कर्ममा लड्डुको हालीमुहाली देख्दा देख्दै लड्डुमा थपक्क हात नहालेर टसमस नभई अन्य उद्यम इलम किन अँगाल्छन् हँ सठहरु ।

हाम्रो देशको लड्डु व्यवसाय फस्टाएको देखेर पढाइमा फस्ट भएका विश्वका शक्तिशाली देशहरु नै तीनछक परेका छन् । जसरी अज्ञानमा भए पनि विज्ञानमा प्रगति गरेको देखेर हामी नेपाली अचम्म मान्छौं । त्यसै गरी, हाम्रो लड्डुमोह देखेर विश्वजगत् ट्वाल्ल परेर अचाक्ली अचम्म मानिरहेको छ । नमानोस पनि किन सानो एउटा गुन्द्रुक पसलको उद्घाटन गऱ्यो लड्डुकै बिस्कुन । सुनको कुरा छोडौं लसुनको पसल खोल्यो लड्डुकै वर्षा । मदिराको के कुरा मलको पसल खोल्यो गोजी भरी लड्डु । कस्तो अचम्म ! छोराको गर्भ रहे पनि लड्डु, छोरीको गर्भ तुहाय पनि लड्डु । लिङ्गभेदविरूद्धको नारा दिनेहरु कता लैङ्गिक विभेद विरूद्धको शाखा कार्यालयको उद्घाटनमा लड्डु उग्राउँदै छन् ? यसो विचार गरौं त हजुर लड्डु नभए यी गणेशका उपासकले हरेक क्रिया र कर्ममा अनि खुसीको उन्मादमा के टकार्थे, कसरी डकार्थे होलान् ?



हेलो बहिनी
किस्ता, ब्याज
तिर्न आउने हैन!
सहकारी लिमिटेड
चटपट
दोकान




पुग्ने भो।
सहकारी




जता जता मलेख्यु
उतै उतै ढल्कु!
म त पाँच
वर्ष ढुक्क
हुँ नि!




खै कमिशन?
छिटो गर्नुस्!
अरे नेता ज्यू
आज भोलि कमिशन घुस
पनि उधारो चल्न थाल्यो,
तपाईंले ढिलो भो।




साँवा ब्याज नाफा नकमाए
के को आउँथ्यो, नत्र त
जिन्दगीको कमाइ त्यसै
खेर जाने भो नि।
राजनीति




बफ
भ्रमण








भारत भ्रमण पछि
बल्ल भात खास
जस्तो भो!




मेरो एक दिनको पसिनाले
पनि डाक्टरको शुल्क तिर्न
नपुग्ने भो
त!
अस्पताल
RECEPTION




चटक हो चटक।
जनतालाई रिमझिम पार्ने बाँसुरी
बजाउनुस् न।




नेता संग खिचेको फोटो पोष्ट
गर्छु। फोटो खिच्न लायकको
नेता भए पो फोटो
खिच्नु त!












# सन्तुष्टि

सुजनबाबु कार्की

धेरै समयपछि मित्रसँग भेट भयो
हाम्रा घर व्यवहारका कुरा भए
छोराछोरीका पढाइका कुरा भए
जागिर व्यवसायका कुरा भए
चिया २/२ चोटीसम्म खाइयो
म धूम्रपान गर्दिनथे कहिले पनि
मेरा मित्रले ४ चोटीसम्म गर्नु भो
नम्बरी चुरोट अरु मगाउनु भो
आफ्नो गोजीमा सुरक्षित राख्नु भो
दिउँसोलाई चाहिन्छ भन्नु भो
मैले हुन्छ नि भनी स्वीकृति दिएँ
उहाँले पर्स ल्याउन बिर्सेछ भन्नु भो
स्पेसल चिया र नम्बरी धुम्रपान गर्नु भो
सबैको तिरो तिरान मैले गरिदिएँ
उहाँ असाध्यै खुसी हुनु भो
हाम्रो भेट नम्बरी भएको व्यक्त गर्नु भो
उहाँ धूम्रपान गरेर सन्तुष्ट हुनु भो
म उहाँलाई धेरै पछि भेटेर सन्तुष्ट भएँ
उहाँको पुरानै बानी सुध्रिएन छ थाहा भो
यस अर्थमा हाम्रो भेटमा खुबै दुवै सन्तुष्ट भयौं ।

# एउटा

समृद्धि माटांगुलु

एउटा रूखले जंगलको शुरूआत गर्न सक्छ
एउटा मुस्कानले मित्रताको शुरूआत गर्न सक्छ
एउटा हातले कसैको मनमा बास पाउन सक्छ
एउटा दियोले सिंगो रात नै उज्यालो बनाउँछ
एउटा खुसीले कसैको बाँच्ने रहर बढाउन सक्छ
एउटा आत्मविश्वासले कसैको आत्मा सन्तुष्टि बनाउँछ
एउटा स्पर्शले कसैको निकै ख्याल गराउँदछ
एउटा गाँसले कसैको भोक मेटिन सक्छ
एउटा मीठो वचनले कसैका लागि साहस बटुल्छ
एउटा नजरले कसैको मन आफूतिर फर्कन सक्छ ।



# महिनावारी र तलब

उद्धव सेढाईं
चरिकोट, दोलखा

छोरा मान्छेको सेलरी
छोरी मान्छेको महिनावारी
उस्तै-उस्तै रहेछन्
कसरी नि, भन्लान्
साथीहरु कुरा बुझ्नुस्
महिनामा एकपल्ट
अनिवार्य आइदिन्छ
कमसेकम चार दिनसम्म
आएको दिनले देखिन्छ
अनि चार दिनपछि
विस्तारै सकिँदै जान्छ
जब कुनै महिना
आएर रोकिन्छ
स्थिति भयावह
रहस्यमय होइजान्छ
कथाले अर्को
मोड लिन्छ
जसको परिणाम
अर्को भइजान्छ ।

# सहकारी खेती

गायत्री लम्साल



वर्तमान नेपालको जल्दोबल्दो, फल्दोफुल्दो उन्नत प्रकृतिको खेती । यसको परिभाषा नयाँ छ, विशेषता नयाँ छ, गुण नयाँ छ । त्यसैले त सबैले अन्य खेती छोडेर यही खेती गर्न हानिएका छन् । सबै व्यवसाय छोडेर यही खेती गर्न तानिएका छन् । अन्य खेतीलाई जस्तो जग्गा, जमिन, मेसिनरी औजारको आवश्यकता नै पर्दैन यसलाई ।

न त कुलो, सिँचाइ, रासायनिक मल । जुनसुकै मौसममा हलक्कै मल्किन्छ । जस-जसले तन, मन र धन दिन्छ उतै-उतै सल्किन्छ । अन्य खेती र सहकारी खेतीमा मात्र एउटा कुराको फरक छ । त्यो भनेको के हो भने अन्य खेतीमा त्यो फलेर, त्यसलाई बिक्री-वितरण गरेपछि मात्र पैसा प्राप्त हुन्छ । हाम्रो सहकारी खेतीमा त्यस्तो झन्झट केही गर्नुपर्दैन । खेती शुरु गर्नासाथ झ्याप्पै पैसा फलिहाल्छ । सहकारी खेतीको उन्नत नारा 'टोल-टोलमा सहकारी-लुट्न सक्नेको घरमा पैसाको भकारी' निकै लोकप्रिय बनेको छ ।

कुनै पनि खेती गर्नुअघि यसका विशेषताका बारेमा जानकारी हासिल गर्नु उत्तम हुन्छ । तपाइँ-हामी पनि यसका विशेषताका बारेमा जानकारी राखौं । यो आफैंमा अत्याधुनिक विशेषताले छताछुल्ल छ । यसको बीऊ-पुंजी संकलन सबै मिलेर गर्नुपर्दछ । अन्य खेती गर्नलाई कुनै विनियमको त्यति आवश्यकता पर्दैन, तर सहकारी खेती गर्न निकै दामी र नामी विनियम चाहिन्छ । अब यहाँ विनियमभित्रका खाँटी कुरालाई नढाँटी पस्कँदै छु । यसका न्यूनतम मापदण्डलाई जानिराखौं ।

१.सहकारी सबै मिलेर गरिने खेती हो । लगानी सबैको परे तापनि प्रतिफल धेरैलाई नआउने मात्र होइन, लगानी नै डुब्न सक्छ, यसैमा चित्त बुझाउनू ।

२.मौकामा चौका हान्न जान्नेहरूले सबै पैसा बोकेर टाप कस्न पाइन्छ । यसका लागि पूर्वतयारी गरेर मात्र यो खेती गर्नु लाभदायक हुन्छ ।

३.अरूलाई देखाउनका लागि, सबैको विश्वास जित्नका लागि हरेक पसलबाट, घरबाट, व्यक्तिबाट दैनिक वचत योजना सञ्चालन गर्नुपर्दछ ।

४.सहकारी खेतीबाट उत्पादन हुने पैसालाई संस्थाका दुई/चार जना ठूला व्यक्तिको हितमा प्रयोग गर्ने सुविधा सधैंका लागि उपलब्ध हुनेछ ।

५. अप्रत्यासित धनको उत्पादनलाई कसरी भरपुर सदुपयोग गर्ने भन्ने बारेमा बेलैमा सोच्नु सावधानी हुनेछ ।

६.कालोधनलाई सेतो मात्र होइन, पहेंलो बनाउन पनि सजिलै पाइन्छ । यसका लागि घरमा हुने वैध श्रीमान् वा श्रीमती कालो/काली, गोरो/गोरी जस्तो भए पनि हुन्छ तर सहकारी खेतीको पैसा पचाउने अवैध श्रीमान्/श्रीमती चाहिं गोरो/गोरी नै राख्नुपर्नेछ ।

७. सहकारी खेतीमा रोजगारी सिर्जना गर्दा भरसक, कमजोर आर्थिक अवस्था भएकालाई भन्दा धनी घरकै, एउटै परिवारका मिलेसम्म उही संस्थाका अध्यक्ष लगायत अन्य ठूलाबडाका छोराछोरी, सालासाली, भाइ/भतिजालाई राख्न पाइन्छ ।

८. अलिअलि ऋण स्वरूप पैसा बाँड्दा हजुरबाबाको पालादेखि चल्दै आएको 'ठेकी' (आफूलाई पाँच/दश प्रतिशत राखिहाल्ने) प्रचलनलाई संरक्षण गर्न पाइन्छ । यसका ब्याजलाई पुंजीकृत गर्न नपाइने भए पनि हर्जानाको नाममा साँवाभन्दा धेरै रकम जोडेर धितो राखिएका अमूल्य जमिन कौडीको भाउमा हडप्न पाइन्छ ।

९. प्रतिस्पर्धी क्षमतामा व्यापक वृद्धि गर्नलाई सहकारी अफिसको लेआउट निकै आधुनिक राख्नुपर्छ । हाम्रा नाङ्गा आँखाले सबै छर्लङ्ग देखिने गरी, तर नचाहिने सीसी केमरा भने नराखेको नै जाति हुन्छ । सीसी केमरा नराखेपछि कहिलेकाहीं आवश्यकता परेका बेलामा सीसी केमरा काट्ने मुसालाई पनि कारबाही गर्ने झन्झट हुंदैन । यस्ता कुरा सबैले बेलैमा जानेको राम्रो ।

१०. जुनसुकै खेतीमा जमाना प्रतिस्पर्धाको छ । त्यसैले यस खेतीमा पनि सोलाई पूर्ण प्रयोग गर्नका लागि अन्य सहकारीहरू ठग हुन्, चोर हुन्, लुटेरा हुन्, हामी मात्र गतिला छौं भन्नुपर्छ ।

यसको विनियमको बारेमा कामचलाउ ज्ञान हासिल गरिसकेपछि अब हामी यसका विशेषतातिर रमाउन थालौं । यसको प्रमुख विशेषता भनेको आफूले एक सयका दरले जम्मा गरेको रकमको निक्षेप हजारमा भए लाखमा, लाखमा भए करोडमा, करोडमा भए अरबमा पछि यसो मेसो मिलाएर झ्वाम्म लुट्न पाइन्छ । यहीं बसेर सजिलै अरबमा पैसा कमाएपछि किन जानु अरब ? किन जानु वैदेशिक रोजगारमा ? सरकारले पनि आफूलाई केही गरेन भन्छ कि भनेर यसो दुई/चार दिन सोधपुछका लागि मामाको घरमा लैजान्छ । तैपनि आत्तिनु पर्दैन । यही खेतीबाट उत्पादन भएको दुई/चार करोड रूपियाँ खुसुक्क दिएपछि सुटुक्क छुट्न पाइन्छ । यत्तिमात्र होइन हजुर आफू छुटेपछि त आफूले पैसा लिएको सुराकी दिनेलाई मरून्जेल पिट्न पाइन्छ ।

सहकारीका विभिन्न किसिम र नाम भए तापनि सबैको काम भनेको सेम माने उस्तै हो । कृषि सहकारी भने पनि फल्ने भनेको पैसा नै हो । अनार, जुनार, माछा, पशु, दुग्ध, वचत तथा ऋण लगायत जतिथरी जे-जे नाम भए तापनि काम भनेको केही फरक छैन । बहुउद्देश्यीय भनेको फरक हो भन्नुहोला । अहँ, पटक्कै होइन । त्यहाँ आफूले ठगेको पैसालाई धेरै ठाउँमा प्रयोग गर्नुपर्छ भन्ने अर्थ हो यसको । जति धेरै सेवामूलक भन्छन्, त्यति धेरै नाफामूलक हुन्छन् भनेर बुझ्दा राम्रो हुन्छ । अनि नि सहकारीका सेयर सदस्य यति जना भने पनि त्यो संख्या भनेको लगानी गर्नेको हो । जति धेरै भए पनि त्यसमा आत्तिनुपर्ने केही छैन । त्यसको साम र ब्याज झरप्प खान पाउने भनेको त दुई/चार जनाले नै हो । लगानी गर्नभन्दा पहिला नै हिम्मत जुटाएर आउनुहोस् । दुई/चार जनाभित्र पर्न सक्नुपर्छ ।

यस खेतीको अर्को प्रमुख विशेषता भनेको यसमा प्रवेश गर्दा आफ्नो मन र मुटुलाई बाहिर नै राखेर पस्नुपर्छ । यस्तो कठोर बन्नुपर्छ कि यदि तपाइँले आफ्नो घर बेचेर लगानी गर्नुभएको छ भने पनि त्यसबाट नाफा त परकै कुरा भयो, लगानीसमेत डुब्न सक्छ ।





तपाइँ जस्तै हजारौंको लगानी डुबेर एक/दुई जनाले भएभरको पैसा बोकेर हिंड्दा पनि तपाइँ हामीले सहकारीको जयजयकार गर्दै ताली पिट्न सक्नुपर्छ । यी त भए लगानी गर्नेका कुरा । त्यस्तै, फाइदा लुट्नेको मन पनि ढुङ्गाकै जस्तो बनाउनुपर्छ । आफूले लुटेको पैसो कहाँ कसरी राख्ने भन्ने टेन्सनको चटारो भएका बेला लगानी डुबेर आत्महत्याको खबर सुन्दा स्याबास्-स्याबास् भन्न सक्नुपर्छ । आफू यमराज भएर अरूको मृत्यु किन्न सक्नुलाई धन्यवाद दिनुपर्दछ ।

सहकारीका ठूलाबडा प्यारा सज्जनवृन्द । सहकारीले देशको जीडीपीमा के योगदान गऱ्यो भनेर केही चिन्ता नलिनुस् । आफ्नो घरबार विचल्ली भएर बेवारिसे हुनेहरूलाई पनि बेवास्ता गर्नुहोस् । चिन्ता त यो मानेमा लिनुस् कि सहकारीको आम्दानीले आफू र आफ्ना सात पुस्ताको एक/डेढ सय वर्ष पछाडिसम्मको जीडीपीमा गरिबी निवारण गर्न सक्यो कि सकेन, हिसाब निकाल्नुस् । यदि नतिजा नकारात्मक आयो भने पुनः सहकारीको खेती शुरू गरिहाल्नुहोस् । यसो गर्नाले तपाइँको पुस्तौं पुस्ता पछाडिसम्मको गरिबी निवारण भै आर्थिक विकासमा टेवा पुग्नेछ ।

अहिले जस्तो एकतीस हजार मात्र होइन धेरै खोल्नुपर्छ सहकारी । यस खेतीको उत्पादन पैसा भन्ने कुरो घरकै भकारीमा राखेपछि अनुगमनका बाउ अड्डाहरूसँग पनि डराउनु पर्दैन । समस्याग्रस्त भनोस् कि फाइदाग्रस्त केही मानेमा हराउनु पर्दैन । महादेवको त्रिनेत्र अगाडि राखेपछि भगवान्का त आँखा लाग्छ भने सरकारको किन नलाग्नु ? बरू बेलैमा होस् गर्नोस है, जे-जसरी हुन्छ आफ्नो भकारी भर्नु नै सबैभन्दा उत्तम हुन्छ । हिजो मात्रै त हो नि आजभोलिका बजारका पण्डित बाजेले समेत सहकारीको नाम साहूकारी, खाऊकारी, माऊकारी, जाऊकारी, कमाऊकारी राख्दा कसो होला भन्नुभएको थियो । मलाई पनि हो जस्तो पो लाग्यो त । जमाना आधुनिक भएर त होला, नीति-नियम आधुनिक, काम आधुनिक, दाम आधुनिक, माम आधुनिक.... सबै कुरा आधुनिक भएपछि सहकारीलाई किन पुरानो नामले पुकार्ने ?

आफूलाई फाइदा आउँछ भने कोरीको पनि पाऊ मोल्नु भन्छन् । आफूले खरबमा उत्पादन गरेको सहकारी छ भने यसो एक/दुई वर्षको जेल बसाइलाई राम्रै मान्नुहोस् । त्यहाँ बस्ता पनि काम नगरीकन मीठो-मीठो खाना, मान-सम्मानका साथ खान पाइन्छ । अनि आफूसँग भएको अलिकति दुई/चार करोड बुझाएपछि फूलमाला लाएर बाहिर जान पाइन्छ । यति गर्दा समेत कालो पैसो सेतो बनाउन अझै बाँकी छ भने आफ्ना भएभरका वैध श्रीमान्/श्रीमतीलाई मात्र होइन, अवैध श्रीमान्/श्रीमतीलाई समेत डिभोर्स गर्ने योजना बनाउनुहोस् । त्यसपछि त सेतो पैसोले नपुगेर पुनः कालो पैसो उत्पादन गर्न पुनः सहकारी खेती गर्न थाल्नुपर्दछ । 'रात रहे त अग्राख पलाउँछ' भन्छन्, सबैको सहकारी खेती रहृयो भने अझ के-के पलाउने हो ? चिन्ता नलिनोस् जे-जे पलाए पनि भारतसँगको खुला सीमाना, स्वीस बैंकसम्मको हाम्रो पहुँच भएपछि निकै अप्ठ्यारो पऱ्यो भने विश्व भ्रमणमा निक्लौंला कसो ?

# बिचौलिया

राजुराम मुनानकर्मी

लय ——ढुंगे बगर माया ढुंगे बगर ....
लेखक : राजुराम मुनंकर्मी
बिचौलिया हुं हजुर, बिचौलिया हुं २
म त देशै पो खाने कीरा हुं ।

रक्तबीजका सन्तान हामी
जालो हाम्रो विशाल छ ।
काण्डैकाण्डमा हामी नै हामी
भ्रष्टाचारमा झन् निहाल छ । २



बिचौलिया हुं.....................।

औषधि खरिद अनि ह्वाइटवडी काण्ड
काण्डहरूको त ठूलै लिस्ट छ ।
ललिता निवास अनि नकली भुटानी काण्ड
यति र ओम्नीको फेहरिस्त नै छ । २

बिचौलिया हुं.....................।

क्यान्टोमेन्ट घोटाला काण्ड
सुनको जलहरी काण्ड अर्को छ ।
३३ किलो सुनकाण्ड सेलाएरै गयो
सीसीटिभी फुटेज काण्ड झनै चर्को छ । २

बिचौलिया हुं.....................।

प्रकरणमा पनि हामी नै अब्बल
नेताहरूको आशिर्वाद झनै छ डबल ।
१ क्विन्टल सुन त पचायौं ख्वार्लाप्पै
भन्सार सेटिङ मिलायौं स्वार्लाप्पै । २

बिचौलिया हुं.....................।

गोकर्ण रिसोर्ट, बतास समूह प्रकरण
गिरीबन्धु, नारायणहिटी प्रकरण ।
सेक्युरिटी प्रेस, पानी ट्यांकी प्रकरण
कालेकोटेसँगको मिलन । २

बिचौलिया हुं.....................।

पैसाले पैसा तान्छ भन्छन् सबै
साना, ठूला माछाहरू मिले सबै ।
दिन दशा बिग्रियो, धमाधम जेल कोचे
मुख्य अपराधि चाहिं किन उम्कें । २

बिचौलिया हुं.....................।

जाँदै छु अब, म देशैबाट
फर्कर आउँदिन ।
नेता जस्तो निष्ठुरीसँग
म माया लाउँदिनँ । २

बिचौलिया हुं.....................।



# रक्सीको धम्की र घुर्की

पार्वती नेपाल
मण्डनदेउपुर नगरपालिका-१०, काभ्रे

रक्सी भनेर नहेप हामीलाई, हामी नभए ती बोतल कसरी भरिन्थे ? ती धोक्रा कसरी ठडिन्थे ? कोदोलाई कसले चिन्थे ? खोयालाई कसले मान्थे ? दुनियाँले सोमरस भनेर मानेको हामीलाई नै हो । भगवानको प्रिय छौं हामी । मानिसको त नहुने कुरै भएन । सयौंथरि नामले चिन्छन् हामीलाई । कोही रक्सि भन्छन् , कोही भन्छन् आइरक । कसैले खोयाबिर्के भन्छन् , कसैले वाइन । वियर, भोड्का, कोही भन्छन् बाहुन पोका । यही भएपछि हुन्छन् सबै भोका ।

पहिलो बिर्को सेवनमा म औषधिको काम गर्छु । दोस्रो बिर्को ठिकै । तेस्रो बिर्को सेवनमा अलिअलि ठाकठुक । चौथो बिर्कोमा ढलमल । पाँचौं बिर्को सेवनमा भित्तो छामछुम । छैठौं बिर्कोले पुर्याउँछ नालीमा । हरेक दिनको सेवनले बनाउँछ रमरम । थाहै नपाइ बन्छन् मान्छे जोगी । म हुं सबैको भोगी ।

लोग्ने स्वास्नीको झगडा बनाइदिने पनि मै हुं । दाजुभाइलाई फुटाउन पनि म खप्पिस छु । अरबपतिका घरमा पनि सजिन्छु म । सबैको गिलासमा दैनिक हजारौंपटक भरिन्छु म । मेरो शक्ति अपरम्पार छ । जस्तोसुकैलाई पनि ढाल्न सक्छु म । चाहे ढुंगा नै किन नहोस् गाल्न सक्छु म । अचम्म यो छ मेरो शक्तिले मान्छे होस् वा जनावर, सबै ढल्छन् तर हरेक दिन भरिएका ती बोतल चाहिं अहिलेसम्म ढलेनन् , खै किन हो गलेनन् ?

हिजोआज मलाई निकै रिस उठ्न लागेको छ । मेरा एकजना निकै प्यारा साथीले एक दिन टन्न पिएछन् । ढल्मलिंदै घर पुग्दा श्रीमतीले गाली गर्दै भनिछिन् , 'आज पनि कुकुरको... पिएर आएछन् ।' मलाई सहिनसक्नु भयो , त्यत्रो दुःखले बनाएको सोमरसलाई कुकुरको .. भन्न कसरी आँट गरेको होला ? कम्ता दुःख छ यो झोल बनाउन ? कोदो उत्पादनदेखि कुहाउनेसम्मको झण्जट कसलाई थाहा र ? त्यसलाई शुद्ध बनाउन कति खर्च छ । मान्छेले खेती गर्दा पनि त यस्तै दुःख त हुन्छ त, एउटै होइन र काम ? यति महंगो आँतै रसाउने अमृतलाई कुकुरको पिसाबसँग दाँज्न मिल्छ ? कुकुरको अपमान भएन यो ? भोलि पशु अधिकारकर्मीले कुकुरको मान हानीमा मुद्दा दर्ता गरे ती श्रीमती महोदयले के गर्छिन् ?

उता एक दिन टन्न पिएर नालीमा पल्टिएको मात्र के थिएँ, त्यो कुकुरले तुर्क्याएर गएछ । त्यसका बाजे अन्त कतै पाएनछ त्यसले पनि तुर्क्याउन ? हामी रक्सी पीडितलाई कति गारो कति नि ? सरकारले पनि हाम्रो इज्जत दिन सकेन । हाम्रै नाम बेचेर अर्बौं राजस्व थुपारेको छ । तैपनि हामीले निर्धक्क भएर पिउन पाएका छैनौं । यो झुटो बोल्ने जमाना छ, कसैले सत्य बोल्दैनन्, कपटी खोल्दैनन् तर एक प्याक लगाइदिनुस्, जिन्दगीमा कहिल्यै नबोलेको सत्य बोल्न थाल्छ । रक्सीसँगै मनका पीडा खोल्न थाल्छ ।

के हाम्रो इज्जत छैन ? हामीले मान नपाउने ? हामीलाई पिउनेले इज्जत किन नपाउने ? यस विषयमा हामी अब एकजुट हुने पर्छ, एउटा रक्सीपीडित आन्दोलन गर्ने पर्छ । छानबिन समिति बनाउने पर्छ । यत्रो लगानीको सम्मान दिने पर्छ । रक्सीलाई मान्यता दिने पर्छ । आउ साहिंली तिमी र म मिलौं । टन्न रक्सी निलौं, अनि भनौं, रक्सी जिन्दावाद ।

# ठोक्क

कुइँकेल काकी द्वारिका

भ्रष्टाचारका विरूद्धमा हुन्छ सधैं नारी
त्यसै कारण खल्ती नभा लाउँछन् ब्लाउज सारी
पुरूषको जताततै खल्ती भाका कारण
भ्रष्टाचार बढ्यो यहाँ देश निमिट्यान्न पारी ।

मौका पाए रेल पनि कुदाउँछन् नारी
पूर्व-पश्चिम, उत्तर-दक्षिण, सररर पारी
के सोचेको नारीलाई अवला र कायरहरू
यस्तो सोच्ने पुरूषको उखेलिदिन्छु दाह्री ।

साँचो पाए जहाज पनि उडाउँछन् नारी
बादलको ढिस्का फोरी सररर पारी
मनुष्य त मनुष्य हुन् के लाग्छ र यिनको
कैलाशमै पुगी तान्छन् शिवजीको दाह्री ।

ममताको सागर मात्रै बगाउँदैनन् निरन्तर
झोक चले देखाइदिन्छन् नारी रूप भयङ्कर
कोई माइकालाल छैनन् नारीलाई मात गर्ने
हार खाई लडेका हुन् ब्रह्मा, विष्णु, महेश्वर
सिंहदरबारका साले, बाघदरबारका बाले
अस्ति जन्म्या छाउरासँग हार खान थाले
अहिलेसम्म जनता मारी खायौ लुटीभुटी
अब आयो देशवासीको बफादार पाले ।





## मृत्यु प्रमाणपत्र

सुमन कार्की

मिति : हिजोको दिन
नाम- पानी पर्दा छाता ओढ्ने बूढा नाति, लबिधरेको छाउरो पिलन्धरे ।
उमेर -१ सय १ वर्ष ।
मृत्युको कारण - प्रेमिका पोइला गएर, आफूलाई सम्हाल्न नसकेर ।
राम्रो काम - बाटोको काँडा पन्छाएर हिंड्ने, अर्की श्रीमतीलाई उपहार किनिदिएको ।
खराब काम - अर्की श्रीमती देख्नै नहुने ।
अन्तिम शब्द - म फेरि फर्कनेछु ।

## श्रीमतीका नौ रूप

नानीराम थापा

घरको काममा व्यस्त हुँदा - अष्टभूजा
बच्चालाई पढाउँदा - सरस्वती
घर खर्च चलाई पैसा बचाउँदा - महालक्ष्मी
घरका लागि खाना पकाउँदा - अन्नपूर्णा
घरका सदस्यलाई दुःख पीडामा साथ दिंदा - पार्वती
घरमा एकसुरले काम गर्दा पति बोलेमा - दुर्गा
श्रीमतीले भनेबमोजिम सपिङ नगर्दा - काली
ससुरालीको नराम्रो बयान गरेमा - महिषासुर मर्दिनी
पतिले परस्त्रीको प्रशंसा गरेमा - रणचण्डी



## कठै, जति धनी भए पनि दिन आएपछि सबैले जानै पर्दोरहेछ

कवि एमबी गुरुङ

सीईयो प्रचण्ड, कार्यकारी अधिकृत माकुने !

आर्थिक मन्दीको असरका कारण नेपालका ४ ठूला बैंक मर्जरमा गएका छन् । प्रचण्ड बैंक, माधव बैंक, उपेन्द्र बैंक र झलनाथ बैंक एक-आपसमा गाभिएका हुन् । नयाँ बैंकको नाम समाजवादी मोर्चा राखिएको छ ।

ग्राहकले अस्वाभाविक रूपमा रकम निकालेर युवा बैंकमा जम्मा गर्न थालेपछि यी पुराना बैंक आपसमा गाभिएका हुन् । प्रतिस्पर्धी बैंकहरूले भने यो मर्जरलाई डुब्न लागेका फाइन्यासको भाग्ने प्रयासमात्र भनेका छन् ।

तत्कालका लागि बैंकको सीईओमा प्रचण्डलाई नियुक्त गरिएको छ । त्यसै गरी, अपरेसन हेडका रूपमा माधव नेपाल, कर्जामा उपेन्द्र यादव, बजारमा झलनाथ खनाल र मानव संशाधनमा विप्लवलाई तोकिएको छ ।

बैंकले शाखा खोल्न स्थानको खोजीमा छ भने नयाँ कर्मचारीका लागि भर्ना आह्वान गरिएको छ । तलब, सुविधा आपसी सहमतीमा निर्धारण गरिनेछ ।



## एमसीसीबाट कसले के पाए ?

रामबाबु फुयाँल

शेरबहादुर - नब्बे करोड
गगन - सत्तरी करोड
प्रचण्ड - असी करोड
माधव - साठ्ठी करोड
झलनाथ - बाह्र करोड
बाबुराम - पैंतीस करोड
रामचन्द्र - अठार करोड
रामकुमारी - सत्ताइस करोड
अग्नि - सन्ताउन्न करोड
उपेन्द्र - एघार करोड
मेठमणि - दश करोड
विश्वप्रकाश - आठ करोड
राजेन्द्र - तेह्र करोड
शेखर - तेइस करोड
पूर्णबहादुर - चौध करोड
सञ्जय - बाइस करोड
ज्ञानेन्द्र - एकतीस करोड



गाईजात्रा २०८०

माङसाव











# समाचार पढाउने र भ्युअर्स बढाउने दिव्य ज्ञान



संप्रस पौडेल, सहसचिव
सिस्नुपानी नेपाल, मकवानपुर

थम्बनेल तस्विर राख्ने तरिकाः

युट्युब भिडियोको शुरूमै देखिने तस्विर अर्थात् थम्बनेल यस्तो आकर्षक हुनुपर्छ कि दाँत नउम्रेका बच्चादेखि दाँत झरेका बूढासम्मलाई भिडियो हेरौं-हेरौं लागोस् ।

हेडिङ देखेरै हेर्न मन लाग्ने तरिकाः

रेखा थापाले फलाना पार्टीको सदस्यता लिएको भिडियो खिचेपछि हेडिङमा 'आखिर किन खोलिन् त रेखा थापाले.....' हेडिङ नराख्ने युट्युबरको भिडियोमा १ सय भ्युज पनि आउँदैन । यसैले सदस्यता लिन पार्टी कार्यालयबाहिर जुत्ता खोलेको कुरालाई यस्ता हेडिङ राखेर मानिसको दिमाग मसाज गर्न सकिन्छ । यसले सयबाट हजार, हजारबाट लाख र करोड भ्युअर्स तताउनेमा कुनै शङ्का नै छैन ।

नयाँ उखान प्रयोग गर्ने तरिका

यस्ता-यस्ता नयाँ-नयाँ उखानहरू प्रयोग गरेमा समाचार एकथरि भ्युअर्स दशथरि कमाइने हुँदा ऐसा तैसा पैसा कमाइनेछ भनेर युट्युब शास्त्रमा प्रस्टै लेखिएको पाइन्छ । आजकाल युट्युबर र युट्युबेबीच सरकारी बैंक र लघुवित्त जत्तिकै फरक छ । नयाँ दल र पुराना दल जत्तिकै खाडल छ । दलहरू दलविहीन प्रतिनिधि जत्तिकै भड्खालो छ । मौका पर्दा जे पनि हेरिदिने, मौका नमिल्दा सज्जन बन्ने हामीजस्ता मध्यमार्गी, तटस्थवादीहरूलाई निम्नखालका युट्युबे लक्षित उखानहरू प्रयोग होउन्ः

(यी उखानहरू सुन काण्डका भिडियोका लागि मात्रै उपयुक्त छन्। तथापि पञ्चायत कालदेखि अहिलेको परिवर्तनसम्म पनि एभरग्रिन चाहिं हुन् है)

नामचाहिं वर्षामान, खडेरीमा सुन थान ।

अन्तर्राष्ट्रिय मिटिङ, बाउछोराको सेटिङ ।

भन्सारमा सुन छ, ल्याउँ भने थुन्छ ।

सरकारी चोरलाई बोर्डर न भन्सार ।

सियो चोर्नेले खुकुरी चोर्छ, खुकुरी चोर्नेले बन्दुक चोर्छ,

बन्दुक चोर्नेले सत्ता चोर्छ, सत्ताको अनुभवी भएसि सुन चोर्छ ।

चिनेको नेता च्यापु चिलाएको निहुँमा चीन पुगेर चोरसँग मिलेर चोरेर सुनचाँदीका चमचम बिस्कुट ओसार्दै चक्मा दिन्छ ।

ओल्लो घरको तस्कर पल्लो घरमा सऱ्यो ।

तैं तस्कर, मैं दलाली कसले गर्नु पहरेदार,

कारबाही हुने बेलामा चिया घूस खाने खरिदार ।

ओल्लो दलको ट्याउँ-ट्याउँ नेता, पल्लो दलमा मुलाबारी भित्ता ।

यस्तो पो भिडियोः

एकैछिनका लागि सानो बच्चालाई झाडीमा राखेर 'अरूले त्यागेका' भन्न पनि सकिन्छ । यति नगरे ५ वर्षमा देश कायापलट गर्छु भनेर आजभन्दा १५ वर्षअघिदेखि भाषण गर्दै आएका नेतालाई बाघे झाप्पुको भिडियो बनाए पनि हुन्छ । कहिले अक्सफोर्ड पढेको मुद्दा, कहिले हवाईजहाजबाट झरेकोदेखि मर्छु भनेर हाम्फाल्दा त्रिशूलीले बगाउन नमानेकोसम्म आत्मालापको घटना भए पनि हुन्छ । घटना जतिसुकै ठण्डा भए पनि भिडियो हट इस्युमा बन्नुपर्छ ।

अन्त्यमा

एकै च्यानलमा ज्योतिषको घरमा सेन्सर प्रयोग भएको गेटको भिडियोमा लाखौं भ्युअर्स छन्, शिक्षक, किसान, मजदुरका दुःखका समाचार पढेकै छैनन् । एकै च्यानलमा वृद्धाश्रममा रोइरहेकी आमाको भिडियोमा बेवास्ता छ, फलाना सेलिब्रेटीको आरोपले हजारौं सब्सक्राइब दिएका छन् । यसरी अरूका विषयवस्तुलाई सार्वजनिक गरिरहँदा भिडियो पस्किने भान्छेले मान्छे बन्नचाहिं नबिर्सिउन् । जदौ ।

# खाडीमा भेटौंला

मैयाँ देवी

चराहरू जाडो छल्नलाई
साइबेरियाबाट नेपाल आउँछन्

नेपाली युवाहरू गरिबी छल्न
खाडीमा धाउने गर्दछन्

बा-आमाका लागि सरकारले
वृद्धाश्रम बनाइदिएको छ

हरेक चार महिनामा
वृद्धभत्ता दिइहाल्छ

स्कुल, कलेजमा
खै व्यावहारिक शिक्षा

जतिसुकै पढेर पनि
नेपालमा जागिर पाइने हैन

कृषि फर्म खोल्यो
दूध, तरकारीले बजार पाउने छैन

घरको ऋणले
जिम्मेवारीको बोझले

हामी युवालाई
कहिले छाड्ने होइन

हामी युवा नेपालमै बसेर
अब के गर्नु, के खानु

खाडी नगए
अन्त कहाँ जानु

लौ त, अब साथी हो
पढ्नु पढाइ सकियो

अब खाडीमा
भेटौंला है, बाई बाई ।











# विवाहित महिलाका ३६५ दिन

**सानु माटांगुलु**

६० रात पिरियड हुन्छ
५५ रात टाउको दुख्छ

५० रात आज थाकेको छु
४० रात बिहान चाँडो उठ्नु छ

३० रात आज मलाई सन्चो छैन
२५ रात आज मेरो मुड नै छैन

२५ रात आज नाईं भोलि है
३५ रात आज व्रत बस्या छु

४५ रात चाडपर्वमा माइत
विचरा विवाहित पुरुष ट्वाँ

# तरुनी नबनाऊ

**सफल भुजेल**

म त भन्छु भगवान् आँखा नबनाऊ
होइन भने राम्रा-राम्रा केटी नबनाऊ
हाई भन्दा कसैले पनि आँखा नतरोस्
तरूनीलाई दिदी भन्न कहिल्यै नपरोस्
चोली चैं बनाऊ भगवान् भोटो नबनाऊ
कपडा चैं बनाऊ भगवान् पहिरन छोटो नबनाऊ
सक्छौ भने सिरकको जस्तो खोलै हाली देऊ
होइन भने अन्तरकुन्तर सबै टाली देऊ
झिलिमिली, झिलिमिली परेका अंग नबनाऊ
म त भन्छु भगवान् यी लोभी आँखा नबनाऊ
होइन भने राम्री-राम्री तरूनीहरू चैं नबनाऊ ।





**श्यामजङ्ग खत्री 'जङ्गे मौसुफ'**
इटहरी, सुनसरी

# जङ्गे मौसुफलाई प्रेमपत्र

(सातौं विवाहोत्सवको सुअवसरमा खतरी अधिराज्यकी जेठी महारानी श्रीमती परमिला राज्यलक्ष्मी देवी खत्रीज्यूले आफ्ना पति परमेश्वर महाराज श्री जङ्गे मौसुफका जुनाफमा चढाइबक्सनुभएको प्रेमपत्र)

मेरो अन्तरमनको मृगौला 'जङ्गे मौसुफ !'

सेतीको खोंचभन्दा गहिरो, यतिको उडानभन्दा खतरा, चुच्चे नक्साभन्दा लामो, भ्रष्टाचारभन्दा बलियो माया ।

हामीले खत्री अधिराज्यमा राज्यभिषेक गरेको पनि ७ वर्ष पुगेछ । यी ७ वर्षमा हजुरले मलाई पृथ्वीनारायण शाहजस्तै सुन्दर युवराज दिइबक्सियो । प्रजातन्त्रजस्तै स्वतन्त्रता प्रदान गरिबक्सियो । सन्दीप लामिछानेजस्तै मनको जेलमा राखी बक्सियो । यसका लागि हजुरका चरणकमलमा साष्टाङ्ग लम्पसार पर्दछु ।

ख्वामित,

यस अधिराज्यमा मकन यति धेरै अधिकार दिइबक्सियो कि मलाई डर लाग्छ, कतै यो अधिकारलाई मैले गणतन्त्रजस्तो छाडा त बनाइनँ ? हजुरको मायालाई संघीयताजस्तो निल्नु न ओकल्नु त पारिनँ ? रवि लामिछानेलाई जस्तै छोड्नु न समाउनु त गराइनँ ? भुल भए क्षमा पाऊँ परमेश्वर !

हे नाथ !

हाम्रो मिलन राप्रपा र एमालेजस्तो मौसमी हैन, न त दुर्गा प्रसाई र राजाको जस्तो हो । हाम्रो माया त शिव र पार्वतीको जस्तो अलौकिक हो । सुम्निमा र पारूहाङको जस्तो प्राकृतिक हो । रोमियो र जुलियटको जस्तो आधुनिक हो । प्रचण्ड र बाबुरामको जस्तो गहिरो हो । ओली र ईन्डयाजस्तो पहिरो हो ।

प्रभो !

मलाई आज पनि याद छ, हजुर आफ्ना सेनासहित मलाई माग्न आउनुभएको त्यो दिन । हजुरले बङ्गाली खैनी च्यापी बक्सेको थियो । दाँत अँगारझैं काला थिए । कपाल जिङ्गरिङ थियो । जिब्रो कोदोको रोटीजस्तो कालो न कालो थियो । तर पनि बिगौतीजस्तै बास्ना आइरहेको थियो, त्यो खैनीमा । खैनी च्यापेको ओठ ब्ल्याक अरेन्जको कालो केस्राजस्तो देखिन्थ्यो । कलौटे दाँत सुरूङमा लुकेका मोतीजस्तो टल्किरहेका थिए । नमिलेको कपाल पनि शेरबहादुरको सुन्दर बगैंचाजस्तो लागेको थियो ।

प्राणनाथ !

हाम्रो सम्बन्ध यो युगको पटक्कै होइन । त्यस लोकको त झन् होइन । मंसिरे शुक्ल पूर्णिमाका दिन मनकामनामा देखादेख हुनु, स्वस्थानीको साङ्केका दिन अरूण किनारमा बोलचाल हुनु, अनि शिवरात्रिकै दिन तालतलैयामा विवाह हुनु ! यो संयोगमात्र होइन । हामी 'पुरव जनम में बिछडे हुए' लैला मजनु हुनुपर्छ । नभए पनि द्वापरका राधाकृष्ण त पक्कै हो । किन कि, हजुरको काले लेकिन दिलवाले स्वभावले यही भन्दछ ।

मेरो त्रिभुवन,

मान्छेले हजुरलाई यस अधिराज्यको महाराजमात्र ठान्लान् । तर, मेरो नजरमा हजुर सत्य युगको पारूहाङ हो । त्रेतायुगको राम हो । द्वापरयुगको कृष्ण हो । कलियुगको रवि हो ।

हजुर लाखौंमा एक हो । जस्तो कि भोजपुरको एकमुखे रूद्राक्ष हो हजुर । संखुवासभाको गुजरगानो हो । इलामको अकबरे हो । कोशी टप्पुको जंगली बँदेल हो । चितवनको एकसिङ्गे गैंडा हो । बाहुनडाँगीको अजङ्ग हात्ती हो । त्यसैले अर्को जुनीमा पनि हजुरकै माउते हुन पाऊँ प्राण ।

महाराज !

हजुरले इटहरीलाई मुकाम बनाएर तालतलैया ससुराली बनाएपछिका वर्षमा तालतलैयामा थामी नसक्नु पर्यटक ओइरिन थालेका हुन् । त्यहाँ हजुरको कहिले नभाचिने फलामको शालिक बनाउने सपना छ । यसका लागि हामीले काजी हेमकर्णलाई आदेश दिइसकेका छौं ।

श्रीपेच !

अर्को ७०० वर्ष खत्री अधिराज्यमा एकतन्त्रीय शासन चलाउने सपना साँचेकी छु । किन कि हजुर मेरो मुटुको धड्कन हो । कपालको चाया हो । कानको गुजीगुजी हो । मनको मौजी हो । यो दासीको दिल नदुखाइबक्सेला ! अर्को जन्ममा पनि हजुरकै महारानी बन्न पाऊँ । नाइँ नभनीस्यो सरकार !

उही हजुरको मायाको प्यासी, चरणकी दासी
श्रीमती परमिला राज्यलक्ष्मी देवी खतरी
खत्री अधिराज्यको गृष्मकालीन राजधानी







# राजा मिदास अचानक त्रिभुवन विमानस्थलमा....

विवश वस्ती

एक दिन अचानक राजा मिदास त्रिभुवन अन्तर्राष्ट्रिय एयरपोर्टमा झुलुक्क झुल्किए । उही पुरानै रूप र भेषभूषासहित । हामीकहाँ मिदास आउँदै छन् भन्ने गन्ध पाएपछि फोहोरमा झिँगा भन्किएझैँ मिडिया-फिडियाका मान्छेहरु गिडगिडाउँदै एयरपोर्टभित्र छिरे । कसैले मिदाससँग 'एक्सक्लुसिव' अन्तर्वार्ता लिन चाहन्थे, कसैले सेल्फी खिच्न चाहन्थे । कसैले उनको हातबाट 'गोल्डेन टच' लिन चाहन्थे । सबैका आ-आफ्नै चाहना र स्वार्थ ! कसैका के, कसैका के । जेहोस्, राजा मिदाससँग सबै झुम्मिन र फाइदा उठाउन चाहन्थे ।

एयरपोर्टमा ओर्लिनेबित्तिकै अपार शुभचिन्तकलाई देखेपछि चकित र थकितसमेत देखिए राजा मिदास । कहाँको ग्रिक, कहाँको नेपाल ! न हावापानी मिल्ने न आतिथ्य सत्कार नै ! उनलाई देखेपछि शुभचिन्तकले घेर्न र घुर्नसमेत थाले । उनी सजग राजा । आफ्नो सुडौल हात ओभरकोटभित्र राख्दै भने- 'मलाई कसैले पनि नछुनु होला । किनकि म राजा मिदास हुँ । मेरो कथा तपैंहरु सबैले पढ्नुभएकै होला ।'

'अँ, अँ हाम्ले तपाईंको कथा पाठ्यपुस्तकमै पढेका हौं । तर, तपाईंलाई त हामीले उहिल्यै पढेका हौं । के अब पनि तपाईंलाई छुन मिल्दैन र ? किन ?' -एक जना जिज्ञासु अनुहारले सोधे ।

'म जुन वस्तुलाई छुन्छु, त्यो सुन बन्छ । तपैंहरूले मलाई..।' -मिदासले भने ।

'अहो ! तपाईं त्यही राजा मिदास नै हो त ?'

'हो, म त्यही राजा मिदास नै हुँ ।' उनी गम्भीर अनि सोचमग्न देखिए र भने- 'मैले कस्तो वरदान पाएको थिएँ भने जुन वस्तुलाई छुँदा त्यो वस्तु शतप्रतिशत सुन बन्थ्यो । मकहाँ कति मानिस आउँथे र भन्थे- 'राजा साहेब मेरो यो चिजलाई छोइदिनुस् न, म मालामाल बन्छु । मैले हरेक प्रजाले ल्याउने वस्तुलाई छोइदिन्थें र त्यो सुन बन्थ्यो । राज्यभरिका प्रजा मालामाल । म पनि खुसी, प्रजाहरु त झनै खुसी । तर एकदिन के भयो थाहा छ..।'

उनी आफ्नो कथा-व्यथा भन्दै थिए ।

अफसोच ! राजा मिदास एयरपोर्टमा ओर्लिनेबित्तिकै जहाज त पूरै सुनमा परिणत भयो । गोल्डेन जहाज । धन्न ! उनले अरु कसैलाई 'टच' गरेका रहेनछन् । नभए सबै सुनैसुन । जहाजको फ्युललाई छोएका रहेनछन् । नभए फ्युल पनि सुनै । जहाज सकुशल अवतरण भो ।



एयरपोर्टमा ओर्लिनेबित्तिकै उनलाई केही मिडिया-फिडियाकर्मीले केही फाल्तुपाल्तु प्रश्न सोधे । पूरै उदासीन मुद्राबीच मिदासले जवाफस्वरूप भने- 'मलाई फलफूल असाध्यै मन पर्थ्यो । स्याउ, जुनार, अनार, हलुवावेद..। एकदिन मैले ती फलफूल खान खोजें, छुने बित्तिकै पूरै सुन ! आफूले खान खोजेका फलफूल खान नपाएपछि म बहुतै चिन्तित भएँ । मैले सोचें कि, के म सुन मात्र खाएर बाँच्न सकुँला र !'

राजा मिदासले फेरि भने- 'एक दिन म प्यासले आकुल व्याकुल भएँ । छेउमै पानीको भाँडो थियो । मैले थपक्क पानीको भाँडो समाएँ, घटघटी पिउन चाहें । पानी त पूरै सुनमा परिणत ! म तीर्खाले आकुल व्याकुल भएँ..।' राजा मिदास झनै बेचैन देखिए र भने- 'न पानी खान पाउँथें, न फलफूल, न कुनै खाद्य पदार्थ..।'

राजा मिदासको आँखा अश्रुले भरिपूर्ण भयो । परेलाको डिलबाट मसिना अश्रु-थोपा बर्साउँदै उनले भने- 'एकदिन मेरी प्यारी छोरी मकहाँ आइन् । उनलाई म स्पर्श गर्न खोजिरहेको थिइनँ तर उनले मलाई बाबा भन्दै झ्याप्पै अँगालो हालिन् । परिणाम नराम्रो आयो । मेरी छोरी सुनमा परिणत भइन् । न उनी बोल्न सक्थिन्, न हिँड्डुल गर्न नै । त्यस दिनयता मैले त्यो वरदान फिर्ता दिएँ ।'

'के तपैंमा अहिले पनि त्यो शक्ति छ ?'

'छ, किन नहुनु ! म आधुनिक मिदास हुँ नि ! मैले अहिले कुनै चिजलाई छोएँ भने त्यो सुनमा परिणत हुन्छ ।' -मिदासले उल्लासित मुद्रामा भने ।

'राजा साहेब ! मेरो यो जुत्तालाई एकपटक छोइदिनुस् न । तपैंले यो जुत्तालाई छोइदिनुभयो भने गोल्ड बन्छ । त्यसपछि त.. म के भन्ने ? हजुरले सप्पै कुरा बुझिहाल्नुभयो नि !' -एक जनाले भने ।

राजा मिदास चिन्तित देखिए र सोधे- 'मलाई तिम्रो जुत्ता छुन कुनै संकोच छैन । तर, यो जुत्ता सुन हुँदा तिमी के गर्छौ ? यही जुत्ता पहिरेर हिँड्छौ ?'

'म यो जुत्ता पहिरेर हिँड्दिन्नँ सर्कार ! यति महँगो सुनको जुत्ता लगाएर हिँड्ने हैसियत राख्ने म मानिस होइन ।' ती पात्र गम्भीर हुँदै भने- 'कम्तीमा पनि एयरपोर्टबाट सुन छिराउने क्रममा म सबैलाई भन्ने छु कि, यो राजा मिदासले छोएको वस्तु हो, यो कुनै सुन-नुन होइन । म तपैंको सम्मान गर्नेछु ।'

'यो एयरपोर्टबाट त सबैले सहजै सुन छिराइरहेका छन्, मालामाल पनि भइरहेकै होलान् तर तिम्ले भने किन मलाई नै यस्तो काममा फसाउन लागिरहेका छौ ?' -राजा मिदासले सोधे ।

'अरु केही होइन महाराज ! अचेल हामीले सप्लाई गर्ने सुन समातिन थालियो । यो राजा मिदास साहेबले छोएको सुन हो भन्दा कम्तीमा दुःख त नपाइएला नि ! एयरपोर्टबाट उम्किसकेको सुन बीच बाटोबाटै सर्कारफर्कारले नसमात्लान् नि ! त्यै भएर हजुरले यो मैले छोएको सुन हो भनिदिनुभयो भने टन्टै साफ !'

पुनश्चः यो प्रत्यक्ष प्रसारण तत्कालका लागि रोकिएको छ । प्राविधिक गड्बडीका कारण । अहिले त जाबो १ सय केजी मात्र न भित्रिएको हो । करिब दुई/चार सय केजी भित्रिएपछि पुनः प्रत्यक्ष प्रसारण गर्नेछौं । ढुक्क हुनोस् । हामी आफ्नो प्रत्यक्ष प्रसारण रोक्ने पक्षमा छैनौं ।

अहिलेलाई भने राजा मिदासका चेला एवं शुभचिन्तकहरूलाई 'गोल्डेन' धन्यवाद ! सबै नेपाली जनता सुनैसुनले भरिपूर्ण होऊन् !

# खाउँ, हजुर खाउँ !

बोङ्खोरे कुलुङ
ठेगाना फेदाप-४, तेह्रथुम
हाल ससुराली गाउँ, यें, नेपाः (काठमाडौं नेपाल)

*खाउ हजुर खाउ, सक्नेले खाउ*
*कसैले ३३ किलो सुन खाउ*
*कसैले ८० किलो सुन खाउ*
*कसैले १०० किलो सुन खाउ*
*कसैले १३३ किलो सुन खाउ*
*खाउ हजुर खाउ, सक्ने खाउ ।*

*खाउ हजुर खाउ, सक्नेले खाउ*
*कसैले एनसेलले तिर्ने करमा तलमाथि गरेर खाउ*
*कसैले बालुवाटारको सरकारी जग्गा मिलाएर खाउ*
*कसैले नेवानी (सानेवानी) मिलाएर खाउ*
*कसैले लडाकूको राशन पानी मिलाएर खाउ*
*खाउ हजुर खाउ, सक्ने खाउ ।*

*खाउ हजुर खाउ, सक्ने खाउ*
*कसैले प्रिन्टिङ प्रेस मेसिनमा मिलाएर खाउ*
*कसैले बेटी पठाओको साइकल खरिदमा खाउ*
*कसैले बेटी पढाओको बजेटमा मिलाएर खाउ*
*कसैले क्रिकेट रंगशालामा मिलाए खाउ*
*खाउ हजुर खाउ, सक्ने खाउ ।*

*खाउ हजुर खाउ, सक्ने खाउ*
*अरूको त के कुरो कार्यालय सहयोगीले पनि*
*प्याकेट दूध, जारको पानी, झाडू, पोता, चियापत्ती,*
*साबुन, चिया जाली, स्यानिटाइजर, चिम, पाउरोटी,*
*चिनी, चिउरा आदिमा मिलाएर खाउ है !*
*खाउ हजुर खाउ, सक्ने खाउ ।*

*त्यसरी अनेक थरी खाने क्रममा*
*अरूलाई चित्त बुझाएर खान नसक्ने र*
*बिला छँदै मिलाएर खान नजान्नेहरू चाहिं*
*मामाघर, झ्यालखाना, पुलिस ठाना, खोर*
*हजुरलाई जुन नजिक र पायक पर्छ*
*त्यतैतिर जाउँ..!?*



# विदेशबाट पठाएको रकम
# सिधैं IME Pay मा प्राप्त गर्नुहोस्

9:41

Hi, Deepa

Balance Rs.

10000.75

Interest Earned

+350.58 @ 5%

80,000 Gold

+ ADD MONEY

RECEIVE REMITTANCE

Services

Recharge

Household Bills

Travel

Stocks

Insurance

Government

Payment

Entertainment

Others

Recent Transfers

Dipak

Bikesh

Preju

Dipesh

Smriti












## सानुराज डंगोल



मन्दी
मुद्रास्फीति
कर




सत्ताको खेल




अब आफ्नै टाउकोमा पनि आगो लगाउन तयार हाँ !




जुन जोगी आए पनि कानै चिरेका ..!
पत्रिका




सत्ता!




गफाडीको संख्या कति ?
कामचोर कर्मचारी कति ?
भ्रष्टाचारीको संख्या कति ?
दलालहरु कति ?
पत्रिका
तथ्याङ्क सार्वजनिक




भुटानी शरणार्थी नक्कली ,
ललिता निवास ज.प्रकरणमा नक्कली मोहि,
सय किलो सुनकाण्डमा नक्कली ब्यापारी ,
हैन, यी देशमा सक्कली चै के छ..?
पत्रिका




फलानो मुख्यमन्त्री राजीनामा दे..!
कोशी प्रदेश




फलानो मुख्यमन्त्री नियुक्ति गर..!




समर्थन चाहियो !
प्रधानमन्त्री चाहियो !




सीसीटीभी
एनसेल
ओम्नी
यती
बालुवाटार
शरणार्थी
सेक्युरिटी
७० करोड
क्यान्टोन्मेण्ट




आश्वासन मात्रै त होला नी!
पत्रिका
नेपालीलाई बिदेशबाट मतदानको ब्यबस्था गरिने




म सेन्टिमेन्टल छु..!
हो बुढा !
प्रचण्ड




के लत बस्यो..!




नागरिक बिधेक पनि पास भो...!
यता हाम्रो गठबन्धन पनि मजबुत भो....!


चौबीसै घन्टा भ्रस्टाचार अनि देश कसरी उभो लाग्छ नेताज्यु..!
अब भगवान भरोसा ..!


अरबी
चाइनिज
अब यतिका भाषा पढेसी काम त कसो नपाइएला बिदेशा..!


ए कता?
सानुराज




EXIT


बैठकमा कति धेरै आलोचनाको अपेक्षा गरेको थिएँ ... थोरै आयो , धन्यवाद तपाँईहरुलाई ...!
?!




गठबन्धन
सानुराज


कार्यालय
बिचौलिया


सिंहदरबारको
आदेश
मान्नु




सुन बरामद
सुन
Gold
सुन
सुन


पार्टी बैठक /LIVE

# पानसिंह टौमार



पालिका
निबेदन
बिचौलिया
Panshing




समृद्ध नेपाल र सुखी नेपाली बनाउने रे।
घोषणा पत्र
२० लाख रोजगारी ग्यारेन्टी गर्दो रे।
Panshing'22




त्रिभुवन → विमान स्थल
Panshing




ब्या नि दुईटा, नागरिकता नि दुईटा, अब गृहमन्त्री नि दुई पल्ट हुनु रे त!?
प्र.म.
Panshing 22




"गृहमन्त्री" दिने कि नदिने? नत्र, म त फेरि अम्रिका गई दिन्छु हैं!
Panshing'22




मैले पनि दिन दिनै चोर्न आनु परेकोले झ्वाक चल्यो, बैंक नै उठाएँ!
बैंक
Panshing'23




हामीले तेरो कमाएको जन होकि धन हो? याँत जनयुद्धको पो शुभकामना भन त?!
!?
जनयुद्ध दिवसको उपलक्ष्यमा सार्वजनिक बिदा!
Panshing'23




सहकारी
!?
सहकारी बेच्ने हो की भइयाँ?!
Panshing'23




हिजो दुर्घटना भएको पल्सर बाइक हो क्या छुटेको, कलाकार हैन हैट!
पल्सर छुटे
Panshing'23




यो तलब हो कि तनाब हो!?
बजार भाउ
तलब
Panshing'23




बरु होली वाइन खाने चैं खाँटी एमाले हुन सक्छ हैं कमरेडहरु!
स्वस्थी खातेहरु एमाले हुन सक्दैनन् - केपी ओली
Panshing'23




पार्टी कार्यालय
किन भित्र बाहिर गर्या रे? आनि अभ्यास गर्न परेन, कुन बेला सरकार छोड्छ-भन्छ थाहै हुन्न!
!?
Panshing'22




बेरोजगारी
आर्थिक मन्दी
Panshing'23




असार १५ को रोपाइँ र दही चिउराको लागि सबै तयारी भो, अब सानो खेत किन्न बाँकी भो!
Panshing'23




फुटबलको गोलफोल सकिएको भए सरकार गठन को मोलमोल पनि मिलाम कि नेता ज्यू!?
संसद भवन
सांसद
Panshing




नेपालीलाई भुटानी शरणार्थी बनाउने यही होत!?
नेकपा टीं कार्यालय
!?
५० लाख
Panshing'23




छोरोको स्कूल ब्याग बोक्न एउटा भरिया पनि संगै स्कूल पठाउन परो! म त सक्दिन तेत्रो भारी उठाउन!
NEWS
साना नानीहरुलाई अनावश्यक किताबको भारी











































# पैसा सापटी दिँदा

सुमन कार्की

मागेपछि शत्रु हुने
फोन सम्पर्कमा नआउने
नमागी जानेर नदिने
पैसा माग्दा बकवास गर्ने
केही हप्ता भनेर वर्षौं नदिने
नैतिकता पटकै नहुने
हातले दिएर खुट्टालाई सास्ती
सम्बन्ध नै तोड्ने
दिनको घरबार नै बिग्रने
हाम्रो त समस्या नै नभा जस्तो गर्ने
आफ्नालाई पुलिस केस गर्न नमिल्ने
लाजसरम पनि नहुने ______
उल्टै मिटर ब्याजको कुरा उठाउने
साहुलाई मारा व्यवहार गर्ने
विश्वासको त अर्थ नराख्ने
एक माघले जाडो जाँदैन भन्ने नसोच्ने
दिएको फिर्ता लिन युद्ध नै गर्नुपर्ने
अर्कोलाई तनाव दिएर आफू चुप लाग्ने
फेरि-फेरि माग्नुपर्ने नसोच्ने
माग्दैगर्दा कसैले खाँदैन भन्ने
उसले माग्दा लरक्क पर्ने
हामीले माग्दा तरक्क पर्ने
उल्टै ठूल्ठूला कुरा गर्ने

## एचएस ढुंगाना





वैदेशिक रोजगार
महँगी
राजनीति
गरिबी
बेरोजगार
भ्रष्टाचार
HS Dhungana '23




नाति नातिनाले बिहे गरिदिइहाले, अब हनिमुन वृद्धाश्रमतिर ।
वृद्धाश्रम
HS Dhungana '23




हो, केही समयलाई भुटानी शरणार्थी बिक्री बन्द छ, पछि आउनुस् है !
Oooo
HS Dhungana '23




जनतालाई नयाँ नयाँ काण्ड देखाउन हो र, लुकाउन पो फाइल खोलेरै छोड्छौं भन्या !
सुन
भ्रष्टाचार
HS Dhungana '23




घरमा झगडा भएर के भो त, टिकटकको भाइरल जोडी हुँदै हो क्यारे,
HS Dhungana '23




काण्ड बा भनेर हुन्छ त ? चङ्गा चेट, सत्ता चेट !!
क
योजना
HS Dhungana '23




यस्तो पनि हुँदो रै'छ हाम्रो नेपालमा ?
लोकतन्त्र
स्वतन्त्र
HS Dhungana '23




'ए प्लस' आउने गरी होमवर्क गरिदिनु भन्या होइन बा ?
HS Dhungana '23




हामीलाई त जुसै भयो नि यो, क्या मिठो, छिटो छिटो चुसौं !
HS Dhungana '23




सुनको दाँत, सुनकै चस्मा सुनकै खप्पर
घरमा जाँदा लसुन छैन फुसको छप्पर !
HS Dhungana '23




सुनकाण्ड, जलहरी काण्ड, नक्कली भुटानी शरणार्थी काण्ड, महँगी, भ्रष्टाचार, बलात्कार गर्न सक्ने नेताको खोजी जारी छ ।
HS Dhungana '23




HS Dhungana '23
वान्टेड : ग्रिन कार्ड भएको उम्रे–खुम्रे जो भए नि बिहे गर्ने ।




किन विदेश जानु , बेवारिसे सुन एअरपोर्टमै खोज्छु, कमाउन किन जानु विदेश ।
एअरपोर्ट
HS Dhungana '23




हस् ड्याडी हस् !!! एक दुई तोला सुन त एअरपोर्टमा समाइहाल्छ, एक दुई क्विन्टलै पठाउँछु है, ढुक्क हुनुस् ।
HS Dhungana '23




अगाडि गुरू, पछाडि सुरू !!
HS Dhungana '23




क्विन्टलका क्विन्टल सुन तस्कर समुद्घाटन समारोह
एअरपोर्ट
HS Dhungana '23




विद्यार्थीलाई पढ है भन्द्या छ, जाऊँ मिस, हिजोको जस्तै टिकटक बनाऔं ।
HS Dhungana '23




कसैको दबाबमा पर्दैनौं ।
सरकार
MCC
हि: ब्रेक
हि: मेक
माफिया
HS Dhungana '23